# जन आस्था साप्ताहिक

JANA AASTHA National Weekly

www.janaaastha.com

वर्ष ३०, अंक १७, २०८१ साल असार १९ गते बुधबार, नेपाल संबत् ११४४, July 3, 2024 मूल्य : रु.१०


### प्रचण्डलाई हटाउने छलफलमा 'छक्का पञ्जा' र 'फटाहा'को प्रवेश

## सत्ता फेर्ने मध्यरातको त्यो गोप्य सल्लाह

'चक्मा राजनीति' को चतुर खेलाडी मानिँदै आउनुभएका प्रधानमन्त्री पुष्पकमल दाहाल 'प्रचण्ड' ले पहिलोपटक देउवा-ओलीको तर्फबाट संयुक्त चक्मा खानुपरेको छ। यस्तो घटनाले बूढानीलकण्ठस्थित चपली हाइटबाट जेठ २८ गते शुरु भई अस्ति (असार १७ मा) मूर्तता पाएको हो।

विभिन्न जटिलतालाई फुकाउने सन्दर्भमा संविधान संशोधनसम्मका उद्देश्यसहित राष्ट्रिय राजनीतिले नयाँ बाटो पक्डिएको स्रोतहरूले जनाएका छन्। यस्तो अभ्यास ६ महिनादेखि नै गरिँदै आएको थियो। यद्यपि, मुख्य दल कांग्रेस सभापति शेरबहादुर देउवा र एमाले अध्यक्ष केपी शर्मा ओलीको हिच्किचाहटका कारण परिपक्व हुन पाएको थिएन। नत्र, एमाले-माओवादी समीकरण बन्ने बेलादेखि नै एकथरि नेताहरू यस्तो अभ्यासमा जुटिरहेका थिए। त्यसो त मुख्य दुई प्रतिस्पर्धी दलबीच सत्ता गठबन्धनका निम्ति सहकार्य हुनुलाई संसदीय राजनीतिको नैतिकताका दृष्टिले पनि उचित मानिँदैन। यस्तोखाले दुर्लभ राजनीतिक अभ्यासले मुलुकका केही साझा कार्यभार भने अन्यौलमा पर्ने संकेत देखिन्छ। वर्षौंदेखि हलो अड्काएर राखिएको विषय हो, सशस्त्र द्वन्द्वकालीन घटनाको व्यवस्थापन र शान्ति प्रक्रियाका बाँकी कामलाई सम्पन्न गर्ने टिआरसी विधेयक। तत्कालका लागि उक्त विषय पेचिलो त बन्यो। तर, ०४७ सालमा न्यायाधीश विश्वनाथ उपाध्यायलाई संविधान सुझाव आयोगको अध्यक्ष बनाइएजस्तै अहिले कल्याण श्रेष्ठलाई अगाडि सारेर संविधान संशोधन गरिने सहमति जुटेको छ।

अर्कातिर, दुई पार्टी मिलेर सुविधाजनक बहुमत प्राप्त हुने स्थितिमा बाँकी सम्पूर्ण राजनीतिक दल प्रतिपक्षी बेञ्चमा पुग्ने भएका छन्। वा, अब बन्ने सरकारमा कांग्रेस र एमालेले 'माया गरिदिएर' कुनै दललाई सामेल गरे अर्कै कुरा, नत्र सरकार गठन गर्न चाहिने संख्याको पर्याप्तता दुई दलसँग प्रष्टै छ। यसले प्रदेशपिच्छे दुई दलीय समीकरणलाई सहज बनाएको छ।

यसबीच विकसित विभिन्न घटनाक्रमका अर्थ पनि विभिन्न ढंगले लगाइँदै आएको थियो। यसक्रममा प्रचण्ड कांग्रेस सभापति शेरबहादुर देउवासँग संवादमै हुनुहुन्थ्यो। यही कुरा बुझेर एमाले अध्यक्ष केपी ओलीले पनि कुराकानीको सिलसिला शुरु गर्नुभयो। भनिन्छ, प्रतीक थापा र बेचन झालाई भारतबाट समातेर ल्याइसकेपछि देउवासँग प्रचण्डको प्रस्ताव थियो, 'एमालेलाई बाहिर राखेर फेरि कांग्रेससहितको गठबन्धन बनाउने !' राजनीतिक परिदृश्यमा प्रचण्डको चलाखीबाट नेपाली कांग्रेसले एकचोटि हैन, दुई वर्षका बीचमा दुई-दुईपटक धोका खाइसकेको थियो। ०७९ को निर्वाचनमा बाँकी ८ पेजमा

### कसको कमजोरीले विदेशमा नेपालको यति ठूलो बेइज्जति ?

# राष्ट्रपतिका छोरा जंगलमा नाङ्गै फेला

**त्यसै त व्यवस्था फेरिँदा पनि अवस्था फेरिएन। त्यसमाथि हिजो राजा–महाराजाका सन्तानका अनेकन अस्वाभाविक गतिविधिबाट आजित जनताले फेरि पनि देशका उच्चपदस्थ पदाधिकारीका सन्तानद्वारा विदेशीका अगाडि देखाइएको लाजलाग्दो गतिविधिको समाचार सुन्नुपर्ने भएको छ।**

अन्तर्राष्ट्रिय श्रम संगठनको ११२ औं अधिवेशनमा भाग लिन जेठ ३० गते स्विट्जरल्याण्ड पुग्नुभएका राष्ट्रपति रामचन्द्र पौडेल असार १ गतेदेखि त्यताबाटै जर्मनीको औपचारिक भ्रमणमा जानुभयो। राष्ट्रप्रमुखको हैसियतमा सन् १९८६ मा राजा वीरेन्द्रले गरेको जर्मन भ्रमणपछि राष्ट्रपति पौडेल ३८ वर्षपछि त्यहाँ पुग्नुभएको हो। त्यहाँको बसाई, भेटघाट र खानपान सबै राम्रा भए। तर, भ्रमणका सम्पूर्ण तालिकालाई बिर्साउने गरी उहाँ फर्किने दिन बर्लिन विमानस्थलमा छोरा चिन्तन पौडेलले देखाएको अस्वाभाविक गतिविधि देखेर नेपाली त लज्जित भए नै, जर्मन सरकारका प्रतिनिधि र सुरक्षाकर्मी पनि जिब्रो टोक्ने अवस्थामा पुगे।

राति राजदूत रामकाजी खड्काको निवासमै बसेका राष्ट्रपतिपुत्र चिन्तनले त्यहाँ राति के खाए वा के-के भयो भन्ने कुरा त अहिलेसम्म बाहिर आएको छैन। तर, अघिल्लो दिनसम्म राम्रो व्यवहार, बोलिसहित पेश भएका उनी बुबा रामचन्द्रसहित फर्किनुपर्नेमा शरीरका कपडा, मोबाइल, पर्स र विभिन्न कार्डहरू फ्याँक्दै अर्धचेतस्थितिको व्यवहारमा उत्रिए। बर्लिनको जंगलमा पुगेर नांगै उफ्रिए। बुबाकै राजकीय भ्रमण टोलीको सदस्यका रूपमा गएका उनी फर्किनुअघि यसरी पेश हुँदा प्रहरीको फन्दामा परे र अस्पतालमा भर्ना गराइए। राष्ट्रपति स्वदेश फर्किनुअघि उहाँको सम्मानार्थ दूतावासले आयोजना गरेको खानपिनकै क्रममा केही अस्वभाविक रूपमा प्रस्तुत भइरहेका थिए। नेपाल फर्किने टोलीसँगै विमानस्थलका लागि निस्किए। अरु जहाज चढे, उनीचाहिँ विमानस्थलमै हराए। यसपछि उनको खोजीमा राजदूत रामकाजी, उनकी बहिनी अवज्ञा, राजदूत पत्नी र खानपिनको व्यवस्थापन गर्ने रेष्टुरेण्ट व्यवसायी दिल गुरुङसम्मले पाउनुसम्मको दुःख पाए।

स्विट्जरल्याण्डबाट जर्मन पुग्दासम्म, अर्थात् पाँच दिन राष्ट्रपतिका हैसियतले बुबाको भ्रमण एकदमै राम्रो भएको बताउने चिन्तन आफैंचाहिँ फर्किनुपर्ने दिन होश गुमाउने स्थितिको कारण अझै खुलिसकेको छैन। उनको हालत खराब भएकैले लण्डनस्थित पत्नी नविता हत्तपत्त जर्मन पुग्नुपरेको थियो। नविता पूर्वसचिव युवराज भुसालकी एकमात्र छोरी हुन्। चिन्तन र नविता इञ्जिनियरिङ अध्ययनका क्रममा पहिलादेखि नै लण्डन बस्दै आएका छन्। चिन्तनचाहिँ बुबा शक्तिमा रहेकै कारण कहिले वैकल्पिक उर्जा प्रवर्द्धन केन्द्रको कार्यकारी निर्देशक त कहिले गरिब घरपरिवार पहिचान परिचयपत्र वितरण समन्वय बोर्डको कार्यकारी प्रमुखमा नियुक्ति पाउँदै आएका व्यक्ति हुन्।

राष्ट्रपतिसँगै नेपाल फर्किनका निम्ति विमानस्थल पुगेको, तर जहाजमा नचढेको सूचना पाएलगत्तै अतिथि सत्कारमा संलग्न दिल गुरुङले प्रहरीमा अनुसन्धान माग गर्दै एफआरआई दर्ता गरे। त्यसपछि चिन्तनलाई खोज्न विमानस्थल पुग्दा त्यहाँ उनको गाडीको चाबी, पासपोर्ट, कार्ड र सबै पैसा सबै फालिएको बुझियो। तर, मान्छे भेटिएनन्। नेपाल फर्किनुअघि दूतावासमै दिइएको भोजको अघिल्लो दिन उनलाई दिल गुरुङले आफ्नै होटेलमा बस्न आग्रहसहित त्यहीँ खानाका लागि अनुरोध गरे। भनेका बाँकी ७ पेजमा

## समस्या प्रणालीमा हो कि सत्तामोहमा ?

*संविधान कार्यान्वयन गर्दै राजनीतिक स्थायित्वसहित विकास र समृद्धिको जनआकांक्षा सम्बोधन गर्नुपर्ने मूल कार्यभार ओझेलमा पारेर सरकार फेरबदलको अर्को श्रृंखला शुरु भएको छ। संसदीय राजनीतिमा अस्वाभाविक मानिने पहिलो र दोस्रो दलले संविधान संशोधनसहित मिलेर सरकार चलाउने समझदारी गरेका हुन्। सोमबार मध्यरातको यो सहमतिसँगै राष्ट्रिय स्वतन्त्र पार्टी सम्मिलित प्रचण्ड नेतृत्वको 'कम्युनिष्ट सरकार' चार महिनामै विस्थापित हुने भएको छ।*

*गत निर्वाचनपछि डेढ वर्षको यो अवधिमा प्रधानमन्त्रीका रुपमा प्रचण्डले निरन्तरता पाइरहे पनि चौथो पटक समीकरण परिवर्तन हुँदा नेपाली कांग्रेस र नेकपा (एमाले)ले सहयात्रा शुरु गरेका हुन्। राजनीतिक स्थायित्वका लागि स्थिर सरकार र संविधान संशोधनलाई सहकार्यका मुख्य आधारको रूपमा अघि सारेर दुई ठूला दल एक ठाउँमा उभिएपछि भावी राजनीतिबारे विभिन्न कोणबाट व्याख्या-विश्लेषण भैरहेका छन्। सोमबार बेलुकी माइतीघर हाइटस्थित राष्ट्र बैंकका प्रथम गभर्नर हिमालयसमशेर जंगबहादुर राणाको घरमा बनेको सहमतिको ड्राफ्टमा राति हात्तिगौंडास्थित क्याप्टेन रामेश्वर थापाको निवासमा कांग्रेस सभापति शेरबहादुर देउवा र एमाले अध्यक्ष केपी शर्मा ओलीले हस्ताक्षर गरेपछि नयाँ सरकार गठनको ढोका खुलेको हो। त्यसअघि* बाँकी ७ पेजमा

## भाउजूको भनसुन त कति हो कति !

मर्मतका लागि पठाइएको नेपाली सेनाको एउटा हेलिकप्टर ( एनए- फिफ्टी सिक्स) मुम्बईको बन्दरगाहमा वर्ष दिनदेखि अलपत्र छ भने फिफ्टी सेभेनलाई पनि त्यसरी नै कुदाउन ठिक्क पारिएको छ। रुसनिर्मित एम आई १७ हेलिकप्टर भारतमा लगेर मर्मत गर्न तत्कालीन प्रधानमन्त्री शेरबहादुर देउवाकी धर्मपत्नी आरजुले विशेष भूमिका निभाएको चर्चा छ। निर्माता रुसी कम्पनीको आफ्नो कुनै जिम्मेवारी नरहने चेतावनीका बाबजुद हेलिकप्टर खोलखाल पारी ट्रकमा हालेर लगिएको थियो। सो हेलिकप्टर मर्मत कार्यको रेखदेख गर्न गएका सेनाका हवाई इञ्जिनियर चिफ राजेश शाह र सुमितजंग शाहलाई होटेलमा राखेर तिमीहरूको ड्युटी सकियो भन्दै फर्काइएको थियो। उनीहरूलाई मर्मत गर्ने कारखानामा सेक्युरिटी रिजनले गर्दा लैजान नसक्ने, जान नमिल्ने भन्दै हेर्न जान नदिइएको बताइन्छ। हेलिकप्टर निर्माता रसियन कम्पनीले भने मर्मतका लागि सम्झौता गरिएको भारतीय कम्पनी रबिन्सन आफ्नो आधिकारिक एजेन्ट नभएकोले केही तलमाथि भए जिम्मेवारी नहुने पत्र पठाएको थियो। पहिलो खेपमा लगिएको भारतीय कम्पनी रबिन्सनमा विवाद आयो भन्दै भोल्गा कम्पनी खडा गरी थप हेलिकप्टर लैजाने प्रयास भइरहेको बताइन्छ। अब त झन् गठबन्धन फेरिएपछि यसरी सेनालाई सिध्याउन सहज हुने नै भयो। हेलिकप्टर मर्मत गर्ने भनिएको भारतीय भोल्गा कम्पनीले मार्केटिङ मात्रै गर्ने अथोरिटी राख्छ। बाँकी ८ पेजमा

## रुवाउनमा पो माहिर रहेछन् रवि

हुन त अहिले पनि 'जान्नेलाई छान्ने' पार्टीको सभापति देशको गृहमन्त्री नै छन्। तर, प्रहरी सरुवा-बढुवा, ठूला मुद्दाको अनुसन्धान, सहकारी प्रकरण, जिबी राई पक्राउमा देखिएको उदासिनतालगायत गृह-प्रशासनका समग्र कामगराइ हेर्दा भने ठीक उल्टो देखिन्छ। गृहमन्त्री जोडिएका सहकारी संस्थामा भएको बचत हिनामिनाको अनुसन्धान गरिरहेका तल्लो दर्जाका कर्मचारीलाई प्रतिशोधपूर्ण व्यवहार गरिएको गुनासो आइरहँदा त्यस्तै एउटा सरुवाको विषय चर्चामा छ।

१९ गते बुधबारदेखि अनिवार्य अवकाशमा जान लागेका डिआइजी पोषराज पोखरेललाई अघिल्लो सोमबार मन्त्रीस्तरीय निर्णयबाट गृहले एआइजीमा बढुवाको सिफारिस गर्‍यो। हप्तादिनमै घर जाने पक्का भैसकेका उनलाई पद खाली नहुँदै हतारमा यसरी बढुवा गर्नुपर्ने आधार, कारण र तर्क देखिँदैन। भनिंदैछ, गृहमन्त्रीसँग निकट रहेको एक मात्र कारण यस्तो अवसर मिलेको हो। केही दिनका लागि प्रथमबाट विशिष्ट श्रेणीको एआइजी बनाएर अवकाशपछि राज्यबाट प्राप्त सेवा-सुविधा बढाउने योजनाअनुसार नै यसो गरिएको प्रहरी स्रोत बताउँछ। त्यसो त, गृहमन्त्री रविले मन्त्रालयको जिम्मेवारी सम्हालेदेखि नै फौजी संगठनको चेनअफ कमाण्ड नै बिथोलिने गरी सरुवा-बढुवामा अत्याचार गरेको आरोप लाग्दै आएको छ। नयाँ सत्ता बाँकी ८ पेजमा

## तर, संविधान च्यात्ने कसरी !

भारतीय राजनीतिमा विकास भएको नयाँ शक्ति सन्तुलन र त्यसलगत्तै नेपालको राजनीतिले अर्को आश्चर्यजनक मोड लिनुबीच सम्बन्ध छ कि छैन ? यसबारे विश्लेषणका विभिन्न कोणहरू अगाडि आएका छन्। ०७२ सालदेखि नै भारतले नचाहेको संविधान छ। त्यसलाई जसरी पनि 'च्यात्नुपर्ने' कसै-कसैको चाहना हुने नै भयो। तर, च्यात्ने कसरी ? समस्या यहाँ छ। भनिन्छ, पहिलो योजनाअनुसार प्रचण्ड सरकारलाई विस्थापित गर्ने र बीचको मान्छे ल्याएर जे गर्न सकिन्छ, गर्ने हो ! त्यसो गर्न नसकिए कांग्रेस र एमाले मिलाउने र संविधान परिवर्तन गराउने ! यसरी दुई तिहाईको सरकार बनाएर कार्यभार पूरा गर्ने चर्चा चलिरहेकै बेला सोमबार प्रचण्डको सरकार धर्मरायो र कांग्रेस-एमालेबीच नयाँ सहमति निर्माण भयो।

भनिन्छ, सात प्रदेशलाई पाँच बनाउने तयारी छ। राष्ट्रियसभाभित्र समानुपातिकलाई समावेश गरी त्यसलाई जातीय सभा बनाउने र प्रतिनिधिसभालाई समानुपातिक कटाएर १ सय ७५ को सट्टा दुई सय पुर्‍याउनेसम्मका कुरा हुन सक्छन्। अहिले प्रतिनिधिसभाको २ सय ७५ र राष्ट्रियसभामा ५९ सीट छन्। त्यसलाई जोड्दा ३ सय २४ संघीय सांसद छन्। शुरुमा भारतले ओलीलाई बाहिर राख्न चाहेको, पछि अनुकूल देखेर स्वीकार गरिएको भन्ने विश्लेषकहरू पनि देखा परेका छन्। त्यसमाथि प्रधानमन्त्रीले संसदमै विश्व बैंक र एशियाली विकास बैंकसँग जस्तै ब्याजदरमा बिआरआइमा हस्ताक्षर हुने कुरा गर्नुभयो। तर, त्यो रोकियो। प्रधानमन्त्रीले संसदमै बोल्न हुने थियो कि थिएन ? बोलिसकेपछि कार्यान्वयन हुनुपर्ने थियो कि थिएन ? यस्ता प्रश्न उठ्न थालेका छन्। शायदै त्यसैलाई काउण्टर बाँकी ७ पेजमा

## को हुन् बहुचर्चित यी बेचन झा ?

भारतको मधुवनी जिल्लाबाट सिराहाको एउटा प्रतिष्ठित परिवारमा ज्वाइँ नाता लाउँदै छिरेको मान्छेले देशका गनेचुनेका नेतालाई घुमाईघुमाई कसरी आफ्नो साम्राज्य खडा गर्छ ? नक्कली भुटानी प्रकरणका फरार अभियुक्त बेचन झाको प्रसंग हो यो।

अर्थमन्त्री वर्षमान पुनले सत्ता गठबन्धनमा आएको संकटसँग बेचन झा पक्राउ मुख्य कारक भएको अभिव्यक्ति दिएपछि उनी को हुन् ? भन्नेबारे विभिन्न चर्चा चल्न थालेका छन्। त्यसो त कांग्रेस-एमाले नेताहरू अहिले सत्ता गठबन्धनमा आएको तरंगसँग बेचन पक्राउको साइनो नभएको दावी गरिरहेका छन्। यद्यपि, उनी कांग्रेस र एमालेका खासखास नेतासँग लामो समयदेखि सम्पर्कमा रहेको देखिन्छ। नेपालीलाई नक्कली भुटानी बनाएर अमेरिका पठाउने गिरोहमा उनको संलग्नता देखिएपछि प्रहरीले फरार अभियुक्तको सूचीमा राखेर खोजी गरिरहेको थियो। उक्त प्रकरणमा पक्राउ परेका धापासीका रामशरण केसीले बेचनले मन्त्रिपरिषदबाट निर्णय गराउनका निम्ति २ करोड मागेको र आफूले चेक पनि दिएको बयानमा भनेका थिए। सोही आधारमा उनी फरार सूचीमा राखिएका र अहिले पक्राउ गरिएका हुन्। धेरै वर्षदेखि नेपालमा ठेक्कापट्टाको काम गर्ने र उच्च राजनीतिक पहुँच बनाएका उनीसँग अहिलेसम्म नेपालको सक्कली नागरिकता छैन। तराईका चर्चित बाँकी ८ पेजमा

## सुमनासामु उठेका गम्भीर सवाल

राम्रा कामको जशजति आफैं लिने, कमजोरी चैं अर्काको थाप्लोमा खन्याएर उम्किने ? एसईई परीक्षामा आधाभन्दा बढी विद्यार्थी फेल भएपछि शिक्षा, विज्ञान तथा प्रविधि मन्त्री सुमना श्रेष्ठतिर यस्तो प्रश्न तेर्सिएको छ। प्रचण्ड क्याबिनेटमा सबैभन्दा बढी चर्चामा रहेकी र 'आशा गरिएकी' पात्र हुन्, सुमना। आम नागरिकको सरोकारसँग प्रत्यक्ष सम्बन्ध राख्ने मन्त्रालयको जिम्मेवारी सम्हालेको चार महिनामा कम बिबाद र बढी चर्चामा रहिन् उनी। नयाँ राजनीतिक परिस्थितिसँगै सुमनाको सत्ता यात्रा सम्भवतः छिट्टै अन्त्य हुँदैछ, तर यो वर्षको एसईईको परिणाम उनका लागि पछिसम्म पनि घोचिरहने सवाल बनेको छ।

चैत १५ गतेदेखि सञ्चालित एसईई परीक्षामा नियमित र ग्रेडवृद्धितर्फ गरी चार लाख ६४ हजार ७८५ जना विद्यार्थी सहभागी थिए। तर, दुई लाख २२ हजार ४७२ जना मात्र उत्तीर्ण भएका छन्। दुई लाख ४२ हजार ३१३ जना विद्यार्थीको 'ननग्रेड' (एनजी) आएको छ। अर्थात् झण्डै ५३ प्रतिशत फेल भएका छन्।

हुन त मन्त्रालयको नेतृत्व कसले गरेको छ भन्ने आधारमा परीक्षाको नतिजा प्रभाव पर्ने होइन। अर्कोतिर, आफूहरूले नेतृत्व गर्न पाए काम गरेर देखाउने रास्वपाको दाबी र रातारात चकाचक गर्न सकिन्छ भन्ने आत्मविश्वास बोकेर गएकी मन्त्रीका लागि एसईईको नतिजा 'पहिलो गाँसमै ढुंगा' भनेजस्तो भएको छ। आधाभन्दा बढी विद्यार्थी फेल हुने यो लाजमर्दो अवस्था किन आयो ? यसमा बाँकी ७ पेजमा

## विद्या बेइजिङ नगएपछि...

सत्ता समीकरणमा आएको फेरबदलसँग सम्बन्ध राख्ने श्रृंखलावद्ध गतिविधिभित्रको एउटा हो, पूर्वराष्ट्रपति विद्या भण्डारीको अन्तर्वार्ता। असार १४ गते बेइजिङ पुगिसक्ने निर्धारित कार्यक्रम छाडेर उहाँ यस्तै बस्नु र १७ गतेको साइतमा देउवा-ओलीबीच लिखित सम्झौता हुनु के संयोगमात्रै होला !

जसरी एमाले अध्यक्ष केपी ओली र पूर्वराष्ट्रपति विद्या भण्डारीबीच मतभेद छ भनिन्थ्यो, त्यसविपरित अन्तर्वार्ता आउँछ र त्यसको एक सातामै ओली प्रधानमन्त्री बनाइनका निम्ति कांग्रेसबाट प्रस्तावित हुनुहुन्छ। उहाँले कान्तिपुरको अन्तर्वार्तामा वाम एकता, प्रचण्ड-माधवको आलोचना, दुई ठूला दल कांग्रेस एमालेबीच सीधा प्रतिस्पर्धा, संसद विघटनको पक्षमा बलियो पैरवी गरेपछि राजनीतिले अर्को मोड लिएको छ। यसर्थ, उक्त अन्तर्वार्तालाई एमालेकै कतिपय नेता 'योजनावद्ध' भन्छन्। एमालेभित्र अध्यक्ष केपीसहित बाँकी ८ पेजमा

## सेनाका अर्का हाकिम यौनकाण्डमा

मुलुककै सबैभन्दा अनुशासित संगठन मानिने नेपाली सेना केही हाकिमका कारण बद्नाम बन्दै गएको छ। अधिकृतहरू उमेर विवाददेखि महिला काण्डमा समेत मुछिन थालेका छन्। यसबीच महासेनानी दिरेन्द्रकुमार मल्लको जन्ममितिमा कैफियत देखिएपछि जर्नेल बनाउने भन्दै अमेरिकाबाट झिकाएर बर्खास्त गरिएको छ। यता, प्रमुख सेनानी विशेष पौडेल महिला काण्ड लागेर सैनिक हिरासतमा पुगेका छन् भने सोही प्रकृतिको लफडामा अर्का लेफ्टिनेण्ट कर्णेल तुलबहादुर बोहोरालाई समेत सैनिक प्रहरीले हिरासतमा राखेको छ। आफ्नै कार्यालयकी महिला सैनिकलाई होटलमा बोलाएको आरोपमा उनीमाथि अनुसन्धान भइरहेको छ।

काठमाडौंको डिल्लीबजारस्थित बन्दोबस्ती अड्डामा कार्यरत उनले अनैतिक उद्देश्यसहित आफूलाई बोलाएको भन्दै महिला ब.का.सि (बन्दोबस्ती कार्य सिपाही) ले उजुरी दिएकी थिइन्। त्यसलगत्तै सैनिक बाँकी ८ पेजमा

## विदेश जान रविलाई बाधा

'इलाका मेरा, धमाका तेरा' भनेजस्तो पार्टी रवि लामिछानेको, मान्छे बालेनको !

सत्ता राजनीतिमा उलटपुलट भएसँगै जसपामा उपेन्द्र यादवलाई एक्ल्याइएकै शैलीमा रास्वपामा रविको हालत हुने अनुमान गरिँदै छ। त्यसमाथि पार्टीभित्र केही प्रतिशत मानिस बालेन पक्षधर हुनु, कार्यसमिति र संसदीय दलमा असन्तुष्टहरू बढ्नु सबभन्दा खतराको विषय बनेको छ। गत शनिवार रास्वपा महामन्त्री मुकुल ढकाल र बालेनबीच कीर्तिपुरमा लामो छलफल भयो। मुकुलको स्वरमा लय मिलाउनेहरू निशा डाँगी, डा. चन्दा कार्की, सोविता गौतम, डा. तोसिमा कार्की, अशोक चौधरी, गणेश पराजुली, विनिता कडायत, मनीष झाहरू हुन् भनिन्छ। डा.स्वर्णिम वाग्ले र विराजभक्त श्रेष्ठहरू त झन् कांग्रेस पृष्ठभूमिकै भइगए। बालेनसँग विभिन्न अस्त्र बाँकी नै छन्। रास्वपा कब्जा गर्ने वा अलि पछि अलग्गै पार्टी खोलेर अगाडि बढ्ने बाँकी ८ पेजमा

## जिबी, रविको टिभीघरमा घरपट्टीको ताला

प्रधानन्यायाधीश र प्रधानमन्त्री निवाससामुन्ने सञ्चालित राष्ट्रिय स्वतन्त्र पार्टी (रास्वपा) का सभापति रवि लामिछाने र सहकारी ठगीमा फरार गितेन्द्रबाबु (जिबी) राईको सुनौलो परियोजना 'ग्यालेक्सी फोर-के टेलिभिजन' बसेको भवन खाली गराउन टाँसिएको ३५ दिने सूचनाको म्याद सकिन केही घण्टा मात्रै बाँकी छ। काठमाडौं महानगरपालिका ३, बालुवाटारस्थित टेलिभिजनको कार्यालय खाली गराउन गत जेठ १७ गते सूचना टाँस गरिएको थियो। वडासदस्य केशवप्रसाद श्रेष्ठको रोहबरमा स्थानीयले टाँसेको सूचनाको अन्तिम मिति असार २० गते रहेको छ। त्यसपछि कानुनबमोजिम बाँकी ८ पेजमा

## अदालत आउने, पुलिसले थाहै नपाउने

सिआइबी र सर्वोच्चको दूरी कति होला ? मुश्किलले ३ किलोमिटर। अनि सर्वोच्चमा खटिने प्रहरी कति होलान् ? एसपी विनोद सिलवाल, डिएसपी नारायण अधिकारी र इन्स्पेक्टर विजय भण्डारीको नेतृत्वमा २ सय २१। तिनको काम न्यायाधीशको सुरक्षा गर्नु मात्रै त पक्कै होइन होला। यदि, त्यसो हुन्थ्यो भने दुर्गा प्रसाईं हतियारसहित छिर्न लाग्दा कसरी समातिन्थे ? हो, यिनै चनाखा सुरक्षाकर्मीको समेत निगरानी क्षमतालाई धज्जी उडाउँदै श्याम ज्ञवाली नेतृत्वको सिआइबीले त्यही अदालतमा नियमित तारिख बुझिरहेका ३ जना हाइप्रोफाइल अभियुक्तलाई फरार 'करार' गरेर मुद्दा बुझाएको पाइएको छ। 'दि डार्क फाइल' ग्यालेक्सी फोर-के टेलिभिजनद्वारा सञ्चालित 'सीधा कुरा' कार्यक्रमको अनलाइन संस्करण 'सीधा कुरा डटकम' ले चलाएको कार्यक्रम हो।

'स्टिङ अपरेशन' का नाममा सञ्चालित उक्त कार्यक्रमको एउटा श्रृंखला विवादमा परेपछि अहिले बन्द छ। सो अनलाइनले केही महिनाअघि 'चार सय बढी भ्रष्टाचारका मुद्दा डिसमिस गराउने सर्वोच्च अदालतका न्यायाधीश सहभागी बैठकको स्टिङ अपरेशन' शीर्षकमा समाचार सामग्री प्रशारण गरेको थियो। त्यसविरुद्ध सर्वोच्चका सूचना अधिकारी गोविन्दप्रसाद घिमिरेले 'अदालतको अवहेलना' मुद्दा दायर गरेका थिए। प्रकाशक युवराज कँडेल, सम्पादक नवीन ढुंगाना र बाँकी ८ पेजमा

## कमरेडहरूका प्रत्येक हिसाब बालकोटमा

एमाले अध्यक्ष केपी ओलीलाई कसरी मान्छे मन पर्न छाड्छ ? यसका रोचक प्रसंग छन्। जतिबेला झलनाथ खनाल एमाले अध्यक्ष हुनुहुन्थ्यो, त्यसबेला ओली-झलनाथ तिक्तताले चरम रूप लिएको थियो। त्यहीबेला सुरेन्द्र पाण्डेले ओलीविरुद्ध १२ बुँदे अभियोगपत्र केन्द्रीय कमिटी बैठकमा पेश गरे। ओली नेतृत्वको मदन भण्डारी फाउण्डेशनले भारतीय सहयोगको पैसा ल्याएकोलगायत बुँदा त्यसमा थियो। ओलीविरुद्ध लगाइएको आरोप सुनेपछि 'हाट्टहुट्टे' स्वभावका केन्द्रीय सदस्य कर्ण थापाले सहनै सकेनन्। हिर्काऊँ, बैठकमै मिल्दैन। नहिर्काऊँ, सहिसक्नु भएन। यसपछि 'ग्वाँ-ग्वाँ' रुन थाले ! यसबापत पुरस्कृत पनि भए। र, (०७०) को चुनावमा अनेकन दावेदार हुँदाहुँदै एक सीट रहेको बाजुराबाट टिकट पाए। उद्योगमन्त्री नै भए। बैठकमा ओलीका निम्ति 'ग्वाँ-ग्वाँ' रुँदै र उहाँकै निम्ति अनेकन मानिससँग धक्कामुक्का गरेर हासिल भएको उक्त अवसर धेरै टिकेन। अर्थात्, ओलीलाई मान्छे मन पर्न छाडेपछि के हुन्छ भन्ने कुराको उदाहरण पनि कर्ण थापा नै हुन्। एकदिन टेलिभिजनको समाचार सुनेर थाहा पाए, आफू मन्त्री पदबाट बर्खास्तीमा परेको। त्यसपछि उक्त मन्त्रालयमा ओलीको रोजाईअन्तर्गत छिरे महेश बस्नेत। जहाँ गयो, त्यहीँ हुलका हुल युवा जम्मा पारी मोटरसाइकल ऱ्याली निकालिदिने, 'ओली बा- हाई हाई' भन्दै नारा घन्काइदिने। त्यसो त यही प्रसंगमा झलनाथ पनि कम्ती व्यक्तिवादी देखिएनन्। कर्णसँगै पर्यटन मन्त्रीबाट झलनाथका बहिनी ज्वाइँ नाता पर्ने केन्द्रीय सचिव भीम आचार्य हटाइए, उनको सट्टा स्वकीय सचिव दीपक अमात्य मन्त्री बनाइए। ओलीले काखैमा च्याप्नुभएका कर्णलाई मन्त्रीबाट हटाउनुको कसुर थियो, पैसामा आशक्ति। मन्त्री भएपछि भेट्न गए जति व्यापारीसँग सीधै माग्ने। छोरालाई आठ-दश मान्छेको साथमा अमेरिका पठाई प्रतिव्यक्ति २५ लाख रूपैयाँ लिएको सुनेपछि ओलीको मन भाँडियो। फलतः अपमानजनक शैलीमा मन्त्रीबाट हटाइए।

अब ओलीको कोपभाजनमा पर्नसक्ने अर्का पात्र हुन्, भर्खरै राष्ट्रियसभा अध्यक्षको ६ वर्षे कार्यकाल सिध्याएका गणेशप्रसाद तिमल्सिना। इतिहास पल्टाउँदा बेनीबहादुर कार्की, डा.मोहम्मद मोहसिनजस्ता दिग्गज राजनीतिज्ञलाई पदासीन गराइँदै आएको राष्ट्रियसभा अध्यक्षजस्तो पदमा पर्वत जिल्लाको जिविस सभापति भएका गणेशलाई माया गरेरै ओलीले अध्यक्ष बनाउनुभयो। तर, अहिले शंकर पोखरेल र विष्णु रिमालसँग खुलेरै ओलीले भन्ने गर्नुभएको छ, 'उसले केही तल-माथि गरेको छ। मैले थाहा पाइसकेँ।' संवैधानिक अंगमा नियुक्त भएका र अहिलेसम्म सर्वोच्च अदालतमा मुद्दा विचाराधीन भएकै सन्दर्भसँग हो, गणेशको मामिला गाँसिएको। नाम समावेशी आयोग, आयुक्तचाहिँ बाहुनै बाहुन कसरी भए ? यस्तो प्रश्न पनि व्यापक रूपमा उठ्यो। यसैमा हो, गणेशले तत्कालीन प्रधानन्यायाधीश चोलेन्द्रसमशेरसँग मिलेर हँमा हँ मिलाएको। सर्वोच्चका पूर्व रजिष्ट्रार डा. रामकृष्ण तिम्सिना गणेशका नाता पर्ने, उनी अध्यक्ष र सहोदर भाइ पुष्प तिमिल्सिना पनि समावेशी आयोगको सदस्य। यति त भयो, भयो- पार्टी काममा समेत ओलीले चाहेभन्दा विपरित गर्दै हिँडेपछि गणेशका दिन खराब हुने भएका हुन्। ओलीले पर्वतको पार्टी अध्यक्षमा हाल कानुन मन्त्री रहेका पदम गिरी पक्षधर गोविन्द पहाडीलाई जिताउने भूमिका खेल्न अह्राउनुभयो। तर, पर्वत पुगेर गणेशले पदमपाणिलाई बाँकी ८ पेजमा

## नोट अफ डिसेन्ट

सीताराम भट्टराई

## एमाले र कांग्रेसलाई राजा चाहिएको त होइन नि !

सत्ता गठबन्धन परिवर्तनको पछिल्लो घटनालाई नेपाली राजनीतिमा अग्रगामी कदम भन्ने या पश्चगामी ? सोमबार मध्यराति प्रमुख दुई ठूला दल नेपाली कांग्रेस र एमालेले सत्ता सहयात्राको सहमति गरेपछि आमसचेत नागरिकमा उब्जिएको प्रश्न हो, यो।

नेपालमा संघीय गणतन्त्र स्थापना भई डेढ दशकको यात्रा तय गरिसकेपछि पनि यस प्रकारका प्रश्नको सामना गरिरहनुपर्ने नियति यथावत् रहनु आफैंमा दुखद कुरा हो। तर, स्वीकार गर्नुपर्ने विषय के हो भने नेपालको राजनीतिक अस्थिरताका लागि सदैव सक्रिय रहने देशी/विदेशी शक्तिका कारण नै बेला बखत यस्ता प्रश्न र चिन्ता अहं हुने गरेका छन्। एमाले र कांग्रेसबीच सम्पन्न सात बुँदे सहमतिको पूर्णपाठ त सार्वजनिक भइसकेको छैन। तथापि, दुवै दलका केही नेताले अनौपचारिक रुपमा गरेका कुराकानीलाई आधार मान्दा सो सहमतिमा जम्मा दुई मुख्य विषय छन्।

ती हुन्, संसद्को बाँकी कार्यकालभरि क-कसले कसरी सरकार चलाउने र ती सरकारले संविधान संशोधनको काम कुन रुपमा सम्पन्न गर्ने ! आगामी साढे तीन वर्ष 'को कहिले प्रधानमन्त्री बन्ने' र 'को-को मन्त्री' बन्ने भन्ने आमसरोकार र महत्वको विषय होइन। तर, संविधान संशोधन एउटा जटिल र दूरगामी महत्त्व राख्ने प्रश्न हो। त्यसैले, यो टिप्पणीमा संविधान संशोधनको विषय किन र कसरी दुई ठूला दलबीचको सहमतिमा छिर्‍यो र त्यसमा बाहिरी शक्तिकेन्द्रको के-कस्तो स्वार्थ छिपेको हुन सक्छ भन्नेबारे विमर्श गरिएको छ। अहिले सार्वजनिक भइरहेका टिप्पणीअनुसार हाल संविधानमा रहेको निर्वाचन प्रणालीसँग सम्बन्धित केही प्रश्न र धर्मनिरपेक्षताको विषय अब गर्ने भनिएको संविधान संशोधनको प्रमुख एजेण्डा बन्दै छन्। यो भनिरहनु पर्दैन कि नेपालको संविधानमा राखिएका यिनै दुई विषय दक्षिणी छिमेकी भारतका लागि सर्वाधिक चासोको पक्ष रहँदै आएका छन्।

यसै प्रसंगमा स्मरण गर्नुपर्छ- ०७२ सालमा संविधान जारी हुनेबित्तिकै भारतले नेपालमाथि नाकाबन्दी गर्ने गरी चित्त दुखाउनुको खास कारण के-के थिए ? विस्तृत रूपमा ती विषयको चर्चा त यहाँ सम्भव छैन। तर, केचाहिँ सत्य हो भने नेपालको निर्वाचन पद्धतिमा उनीहरू आफ्नो केही निहित स्वार्थ छिराउन चाहन्थे। जुन त्यसबेला सम्भव भएन। अहिले पछिल्लो पटक यिनै विषयमा यही नै परिवर्तन गर्नुपर्छ भनेर सायद कुनै विदेशी शक्तिले प्रस्ताव बाँकी ८ पेजमा

आस्था प्रकाशन प्रा. लि.को निमित्त

सम्पादक : किशोर श्रेष्ठ

प्रबन्ध सम्पादक : राजेन्द्र स्थापित

कार्यकारी सम्पादक : विश्वमणि सुवेदी

कार्यालय : सानेपा, ठाडोढुंगा, ललितपुर

फोन : ५५४१५५२, ५५२२५५१

इमेल : jana . aastha@gmail . com

वेबसाइट : www . janaaastha . com

मुद्रण : सुजल अफसेट प्रेस, बागबजार, फोन : ४२३३४५९

## सम्पादकीय

# कसमाथि आशा, कसको गर्ने भरोशा ?

केटाकेटीले स्कूल र कलेज बंक गरेको त सुनिएकै हो तर देशको संवैधानिक निकायकै प्रमुख र हुनेवाला प्रमुखहरूले पनि आफ्नो जिम्मेवारी पन्छाउन थालेपछि, नेपालको न्यायालयमा तर्कने, फर्कने र झर्कने आदेशको चर्चा हुन थालेको छ । माओवादी नेता अग्नि सापकोटा प्रतिवादी रहेको द्वन्द्वकालीन हत्याकाण्डमा आदेश गर्नुपर्ने भएपछि, हुने वाला प्रधानन्यायाधीश प्रकाशमान सिंह राउत गतहप्ता मुक्तिनाथतिर धार्मिक तीर्थयात्रामा निस्किदिए । नाम चलेका न्यायाधीशहरूले समेत ठुल्ठूला मुद्दा नहेर्ने र कुनै न कुनै बहानामा हापेर वा तर्केर हिँड्ने त रोगै हो । त्यसो त प्रधानन्यायाधीश विश्वम्भरप्रसाद श्रेष्ठ आफैँ पनि पेशी तोकेर किनारा लगाउनुपर्ने ५२ भाइ पदाधिकारीको मुद्दा हेर्नुपर्ला भनेर त्यही बेला कहिले जनकपुर त कहिले कता हिँडिदिने गरेका छन् ।

कान्तिपुर दैनिकका प्रकाशक कैलाश सिरोहिया प्रकाशमान सिंह राउतले मुद्दा हेर्ने जोखिम मोल्न नचाहेकै कारण प्रहरीको गिरफ्तारीमा परेको जगजाहेर छ । राउतले मुद्दा हेर्न नभ्याउनेमा राखेको भोलिपल्ट सिरोहियालाई पक्राउ गरिएको थियो । अरुलाई न्याय दिनुपर्नेहरूले नै कहिल्यै कुनै समस्या झेल्न नपरोस्, महाभियोगजस्ता आरोप खेप्न नपरोस् अथवा पदावधि समाप्त हुनुअगावै आफैँले राजीनामा दिने वातावरण तयार नहोस् भन्ने अभिप्राय बोकेको देखिन्छ भने रिटायर्ड भएपछि मानवअधिकार आयोगलगायतमा नियुक्ति खान बाधा नहोस् भन्ने मनशाय राख्दा राजनीति जोडिएका कतिपय मुद्दाको जिउँदै शहादत हुने गरेको अवस्था छ । त्यसो त प्रधानन्यायाधीशले संसदीय सुनुवाइमा उपस्थित हुँदा राजनीति जोडिएका मुद्दामा सांसदहरू एकमुख लागेर कुर्लिने गरेकै छन् । तसर्थ जोखिमयुक्त अवस्था निम्त्याउनुभन्दा मुद्दा पन्छाउनु सहज र बुद्धिमानी हुने ठहर गरेको हुनसक्छ ।

विश्वम्भर श्रेष्ठ असोजमा रिटायर्ड भएपछि प्रकाशमान राउत १४ महिनाको लागि रोलक्रममा छन् भने राउतपछि सपना प्रधान मल्लले पौने तीन वर्ष चलाउनेछिन । मल्लपछि कुमार रेग्मीले करिब अढाइ वर्ष प्रधान न्यायाधीशको जिम्मेवारी सम्हाल्ने देखिन्छ । रेग्मीपछि हरि फुयाँल अनि नहकुल सुवेदी हुँदै टेकप्रकाश ढुंगाना रोलक्रममा छन् । यी सबैको अवधिलाई जोड्ने हो भने वि.सं.२०९३ सालसम्म कोही पनि जोखिम मोल्न चाहँदैनन् । त्यसो हो भने यी न्यायाधीशहरूले अवकाश नपाउञ्जेलसम्म अहिलेको अवस्थामै नेपालको न्यायालय र न्यायप्रणाली चलिरहने हो त ? न्यायाधीशलाई पनि मुद्दाको विषयमा द्विविधा वा अप्ठ्यारो भए, समयमा छिनोफानो नभए त्यसको अन्तिम निर्क्यौल दिने जिम्मेवारी त फेरि पनि प्रधानन्यायाधीशकै हो । यस्तो जिम्मेवारी निभाउनबाट प्रधानन्यायाधीशहरूका हात कामे भने मुलुकले न्यायको आशा गर्न सक्दैन । तर अहिले संवैधानिक परिषद्मा ५२ भाइ नियुक्ति, अग्नि सापकोटा, रवि लामिछानेको सहकारी ठगी प्रकरणलगायतमा न्यायाधीशहरूको 'बोल्ड डिसिजन' आएको छैन । मुद्दा पन्छाएको अवस्था मात्रै देखिन्छ । अर्कोतर्फ न्यायाधीशहरूले अन्तरिम आदेश जारी हुने, दाबी पुग्ने, दाबी नपुग्ने, अन्य आदेश जारी हुने व्यहोरा लेख्ने गरेको तर तर्कने र फर्कने आदेश पनि थप्दा उत्तम हुने व्यङ्ग्य न्यायवृत्तमै चल्न थालेको छ । भर्खरै नियुक्त सर्वोच्च अदालतका न्यायाधीशमध्ये टेकप्रकाश ढुंगानाबाहेक अरु कोही पनि प्रधानन्यायाधीशको रोलक्रममा देखिएका छैनन् । बरु ती न्यायाधीशले मुद्दामा बिना कुनै मोलाहिजा दनादन फैसला दिन थालेका छन् । यस्तै बोल्ड निर्णय गर्नेमा मनोज शर्मा, तिलप्रसाद श्रेष्ठ र विनोद शर्माको नाम आउँछ । त्यसो त मनोज शर्मा ३ वर्षबीच सबैभन्दा बढी फैसला दिने न्यायाधीश प्रकाश वस्तीकै हाराहारीमा देखिन्छन् ।

# माओवादीलाई सत्ताको बोसो घटाउने मौका



• मनऋषि धिताल

अन्ततः एमाले नेता ओलीले धोका दिए । त्यो हामीलाई अनौठो र आश्चर्य लाग्ने कुरा थिएन । जुनसुकै अवस्थामा पनि उनले क्रान्तिकारी शक्तिलाई दुर्घटनाको नजिक पुऱ्याउँछन् भन्ने प्रष्टै थियो । केही वर्षअघिको पार्टी एकता र भुइँ तहका कार्यकर्तासम्म पुगेको सद्भाव पछिल्लो गठबन्धनबाट बढेको थियो । इमान्दार कम्युनिष्ट समर्थक, शुभचिन्तक र कार्यकर्ता फेरि एउटा बिन्दुमा एमालेसहित एकीकृत कम्युनिष्ट पार्टी निर्माण होस् र दुई तिहाइभन्दा बढी नेपाली वामपन्थी जनमतले देशको शासन सञ्चालन गर्ने अवसर आओस् भन्ने कामना र प्रतीक्षा गर्दै थिए । तर, शीघ्र सत्तामोह भएका र ०६२/६३ सम्मको क्रान्तिका केही उपलब्धिलाई जसरी हुन्छ सखाप पार्ने कसम खानुभएका नेता ओलीले जे गर्नुभयो त्यो कुनै नयाँ काम होइन । अब हामी क्रान्तिकारीहरूले अर्को आन्दोलन, त्याग र बलिदानको लागि तयार हुनुपर्ने प्रष्टै देखियो । पहिले नै गर्भाधान भएको र सोमबारदेखि सतहमा आएको नयाँ (खासमा नयाँ होइन)समीकरणपछि अब माओवादी अध्यक्ष प्रचण्डले रोल्पा गएर केही दिन चुपचाप बसी सोमबारको प्रभातकालीन चियापानसम्मको सम्यक् समीक्षा गर्नुपर्छ र क्रान्तिकारीबीचको एकता, ध्रुवीकरण वा नयाँ आन्दोलनको खाका कोर्नुपर्छ । कांग्रेस-एमाले मिलेर सरकार बनाउनु र क्रान्तिका उपलब्धि मास्ने गरी संविधान संशोधनको योजनासमेत बनाउनु नयाँ परिवेशको ०५२ अघिको जस्तै परिस्थिति आउनु पनि हो । र, यो हाम्रालागि पूर्णतः प्रतिक्रान्ति थोपर्ने अन्तिम परियोजना हो । उनीहरूले अब जनयुद्धको तयारी तथा जनयुद्धकालका मुद्दासमेत उठाएर फेरि दमनको नीति लिन्छन् र परिस्थिति प्रतिकूल भएको हिसाब गरेर शान्ति प्रक्रियाका बाँकी कामलाई झन् बल्झाउँदै जानेछन् । बल्झाउने मात्रै होइन दमन र प्रतिशोधको नीति लिनेछन् । अब जनयुद्ध र पछिल्ला सबैखाले जनआन्दोलनको उपलब्धिको सार तत्वलाई 'सेबोटेज' गरेर नाम मात्रको 'गणतन्त्र' राख्ने र क्रान्तिकारी राजनीतिक नेता र जनतामाथि षड्यन्त्र र दमनको नीति लिइने पक्का छ । उनीहरूले जनयुद्ध, जनआन्दोलन र नयाँ संविधान बनेपछिको डिजिटल जागरणबाट पैदा भएका नयाँ राजनीतिक शक्तिलाई राजनीतिको मूलप्रवाहबाट किनारातर्फ धकेल्ने मात्रै होइन, सिध्याउने योजना बुन्नेछन् ।

०६२/६३को राजनीतिक परिवर्तन अघिल्ला विभिन्न मोडमा कहिले आ-आफैँ त कहिले सामन्ती राजतन्त्रसँग मिलेर जनदमन गर्ने अनुभव भएका दुई ठूला पार्टीको अबको राजनीतिक मार्गचित्र फेरि त्यही पुरानै हुने निश्चित छ । यो एमाले-कांग्रेस गठबन्धनको परिस्थिति निर्माण प्रचण्ड सरकारको सुशासन र विकासको अभियान नै हो । विशेष गरी सुशासनमा भ्रष्टाचारविरुद्धको अभियान उनीहरू दुवैको दैलोमा पुग्नै आँट्दा यो गठबन्धन निर्माण भएको छ । सत्तामोह र आफ्ना काण्डैकाण्डबाट बच्न रवि लामिछाने पनि उनीहरूसँगै हुन्छन् । राजनीतिमा गहिरो सैद्धान्तिक अन्तर भएको बताउन चाहने संसदका पहिलो र दोस्रो दल मिलेर तथाकथित 'स्थिर' कार्यपालिका गठनको तयारी गर्नु, क्रान्तिअघिको न्यायपालिकाको मुख्य भूमिकामा रहेर क्रान्तिका उपलब्धिलाई स्वीकार नगर्ने व्यक्तिलाई संविधान संशोधन गर्ने आयोगको संयोजक बनाउने तयारीसमेत हेर्दा फेरि देशलाई द्वन्द्वतिरै लैजाने षड्यन्त्रका साथ यो गठबन्धन बनेको प्रष्टै छ । अहिलेको जटिल, कठिन र अविश्वासको परिस्थितिमा क्रान्तिकारीले जनतामा गएर सत्य बोल्ने साहस गर्नुपर्छ र यस बीच सरकारमा रहँदा आफूले गरेका कमजोरी र गर्न नसकेका कामबारे पनि आत्मालोचनासहित जनतामा जानुपर्छ । सत्तामा रहँदा बढेको बोसो घटाउने र नयाँ परिस्थितिअनुसार जनतालाई जागृत गर्ने यो नयाँ अवसर पनि हो ।

# काठमाडौँबाट कर्णाली पुगेको प्रचण्ड राजनीति

रामकुमार एलन

वैज्ञानिक ज्याकोब ब्रोन्स्कीले भनेका छन्, 'विज्ञानले राजनीतिक संक्रमण ठीक पार्ने र शक्तिका आडमा हुने भ्रष्टाचार तह लगाउने खोप चैं आविष्कार गर्न सकेन ।' यदि यसो हुँदो हो त अहिले नेपाल मात्र होइन, संसारकै राजनीति सुशासनयुक्त हुने थियो । पटकपटक परीक्षणमा सुविधाजनक बहुमत सावित पुष्पकमल दाहाल 'प्रचण्ड' 'राजनीतिक स्वास्थ्य शिविर' पुगेर सामान्य परीक्षण नगर्दै र कुनै खराबी रिपोर्टबिनै 'भेन्टिलेटर' पुगे । जबकि उनी सोमबार दिनभर दुई पटक संसद विघटन गरेको आरोपमा माधवकुमार नेपालसँग मिलेर पार्टीबाट निकाल्नसमेत तम्सिएका उनै एमाले अध्यक्ष केपी ओलीसँगको बसाइमा यसको कहीं कतै सुइँको नपाउने निरीह प्राणी बने । आफू र सरकार 'ओपिडी'बाट 'आइसियु'मा झरिसकेको र ओलीका केहीबेरका मीठा बातपछि 'भेन्टिलेटर'तिर हुने सुइँकोरहित उनको राजनीति यसपटक गजबले पछारियो । यस्तै 'पाहापछार' उनको बहुमतको सरकारले संविधानसभापछि पनि पाएको थियो रुक्मांगद कटवाल प्रकरणमा ।

बेलाबेला उनले भन्ने गरेका थिए, 'म प्रचण्ड हुँ, जुनसुकै बेला भुक्क लात्ताले हान्न पनि सक्छु ।' खासमा उनले भन्नुपर्थ्यो, 'पटकपटक भुक्क लात्ताले हानेर ढलेपछि उठ्दै आएको हुँ, यसपटक पनि फेरि त्यस्तै भुक्कमा पर्नसक्छु, सहने क्षमता छ ।' आज बहुमतको सरकार चिहिलबिहील बनेको छ । कस्तो चिहिलबिहील भने हाँसिखुशीमा रमाइरहेको परिवारका आमाबाबुलाई प्रहरीले हत्कडी लगाएर लगेपछि सन्तानको अवस्था के हुन्छ ? अथवा सडकमा रमाइरहँदा सवारी साधनले रक्तमुछेल हुने गरी अभिभावक किचेर मारिदियो भने सन्तानको मनोदशा कस्तो हुन्छ ? त्यस्तै भएको छ नेकपा माओवादी केन्द्र र पतिलाई पनि छाडेर माओवादीको पछि लागेकी रञ्जिता श्रेष्ठको । अँ, रञ्जिता श्रेष्ठको संसदीय दलका नेताको पद पनि पतिबाट अपहरण भएको अर्को गजबको खबर छ । राजनीति हो, पतिले पत्नीलाई, भाइले दाइलाई नछाड्ने घोर कलियुगमा हामी छौं । बेलाबेला राधिका दासी युट्युबमा भन्ने गर्छिन्, 'कलियुगको पापको घडा यस्तो भरिँदै गयो कि मान्छेको आयु १०० बाट ७५, ७५ बाट ५०, ५० बाट २५ मा झरिसक्यो, अब साढे १२ वर्ष मान्छेको आयु हुनसक्छ ।' जब मान्छेकै आयु यति तल झरिसक्यो भने राजनीतिक सत्ता जतिसुकै बहुमत सावित होस्, प्रचण्डकै सरकारको आयुजति हुने पक्का छ । भोलि ओली या देउवा सरकारको आयु पनि यस्तै छोटिने स्थिति छ ।

पुष्पकमल दाहालले बुझ्नुपर्थ्यो, यदि केपी ओलीले रवि लामिछानेको भाषामा टुँडिखेलमा राखेर नाकको डाँडी भाँच्ने गरी हान्नुपरे पहिलो पात्र शेरबहादुर देउवा, माधवकुमार नेपाल नभएर अब प्रचण्ड नै हुनेछन् । तर उनमा देखिएको अतिरिक्त आत्मविश्वासले यसपटक नराम्रो प्रहार खायो । उनी अहिले सबैसँग अविश्वासको पात्र बन्ने अवस्थामा पुगेका छन् । माधवकुमार नेपालसँग एक वचन छलफल नगरी केपी ओलीसँग मिल्न गए । आफ्नो सत्ताको शत्रु उपेन्द्र यादवलाई देखे । उपेन्द्रको पार्टी फोरेपछि सत्ताको आयु चिरकालसम्म खतरामा नपर्ने र माधवकुमार नेपालको 'धपेडी' खारेज हुने भ्रममा बाँचिरहेका प्रचण्डले बुझेनन् कि केपी ओली 'खाना खान छाडेको नाग' भइरहेका थिए । अति माया गरेर पालिएको र प्यार गरिरहेको नागले केही दिनदेखि खाना खान छाडेर तपाईंको शरीर नाप्दै चुम्बन गर्न थाल्यो भने त्यसले पाल्नेलाई नै खाने तयारी गरिरहेको हुन्छ भन्ने मिथक छ । तर प्रचण्डले एमालेतिर रत्तिएका आफ्नै सचिवालय सदस्यहरूको अतिरिक्त रञ्जनाको भ्रमजालले दिनहुँ निरीह हुँदै गइरहेको भेउ नै पाएनन् ।

बलशाली प्रधानमन्त्री प्रचण्डले माधवकुमार नेपाललाई केन्द्रमा दुई मन्त्री र एउटा प्रदेशमा मुख्यमन्त्री अनि उपेन्द्र यादवलाई केन्द्रमा दुई मन्त्री र मधेश प्रदेशमा मुख्यमन्त्री दिइरहँदा कांग्रेससँगको सहकार्यमा 'शंका' गर्नु सबैभन्दा ठूलो त्रुटि थियो । कांग्रेसका दस्तावेज, हिन्दूका हस्ताक्षर सटरले मात्रै आत्तिनुपर्ने अवस्था थिएन । राष्ट्रिय सभा अध्यक्षका लागि कांग्रेसलाई बिच्क्याउनु अनि वामशक्तिको लक्षणसहित सदावहार साथ दिने माधवकुमार नेपाललाई शत्रु बनिरहेको देखेर उपेन्द्र यादवको पार्टी भत्काउँदा आज प्रधानमन्त्री यता न उताको भएका छन् । उनकै सचिवालयका नारायणकाजी श्रेष्ठ, वर्षमान पुनहरूको भूमिका दोधारे थियो । एमालेले कतिसम्म 'मार्केटिङ' गरेको थियो भने, कुनै एक मन्त्रीले एमाले अध्यक्षलाई फोन गरेर 'मलाई फलानो मन्त्री नदिने भए, तपाईंले पाएको परराष्ट्र मन्त्रालय छाडिदिनोस्, म फेरि मन्त्री हुन चाहन्छु भनेर' भनेका थिए । त्यही भएर एमालेले गृह, परराष्ट्र, अर्थजस्ता महत्वपूर्ण मन्त्रालय छाडेर रवि लामिछानेसहितको सरकार जुरुक्क बोकेको थियो ।

**राष्ट्रिय सभा अध्यक्षका लागि कांग्रेसलाई बिच्क्याउनु अनि वामशक्तिको लक्षणसहित सदावहार साथ दिने माधवकुमार नेपाललाई शत्रु बनिरहेको देखेर उपेन्द्र यादवको पार्टी भत्काउँदा आज प्रधानमन्त्री यता न उताको भएका छन् ।**

भएभरका ठाउँमा एमालेका नेता, कार्यकर्ता सेट भइसकेका थिए । केपी ओलीले प्रचण्डलाई नियुक्तिका लागि हस्ताक्षर गराइरहेका थिए । पार्टी एकताको कथा पनि राधिका दासीहरूकै मीठो लवजमा वाचन भइरहेको थियो । जनार्दन शर्माबाहेक बाँकी सबै एमालेमा मिसिन, भित्रिन, सुरक्षित रहन र अध्यक्षलाई राष्ट्रपतिको घाँस हालेर आफ्नो बाँकी आयु सत्ता र पदमा रहेर बिताउने मोहमा रत्तिइरहेका थिए । मोहन वैद्य, रामबहादुर थापा बादल, बाबुराम भट्टराई, नेत्रविक्रम चन्द, टोपबहादुर रायमाझी जस्ता जनयुद्धका सारथीहरू पाखा लागेकामा अब अध्यक्षलाई पाखा लगाउन पाए बाँकी आयु एमालेछाप हुँदा पनि पदसहित भए हुन्छ भन्नेमा सबै एकमत थिए । असहमति जनाउने जनार्दन शर्मालाई पार्टी छाडेर जाऊ भन्ने प्रधानमन्त्रीसँग आँखा तरेर कुरा गर्ने उनै जनार्दन आज पनि बेठिक बने । उनको अबको अध्यक्ष म हुन्छु, पार्टी बनाउँछु भन्नेबाहेक अरु कुनै गल्ती थिएन । मतभेद त पार्टीमा हुन्छ नै । यस्तो कमजोर अवस्थामा पुष्पकमल दाहाललाई भित्तामा पुऱ्याउन ओलीलाई धेरै समय लागेन । आफू प्रधानमन्त्री भएको तीन महिनामा खङ्ारिनुपरेको रिस ओलीले उनै प्रचण्डलाई दिनभर लठ्याएर 'डेलिभर'मा ध्यान दिनुहोस् भन्दै मन्त्रिपरिषद् बैठकमा जाँदासमेत अरु दिनभन्दा हाँसिखुशी बनाएर पठाइदिए ।

तर, रात रहे अग्रख पलाउँछ भन्ने डर सबैभन्दा बढी कतै हुन्छ भने त्यो राजनीतिमै हुन्छ । ढलेको अग्राख पलाउँदैन भन्छ विज्ञान । त्यही भएर ७० कटेका नेताहरू मध्यराति राष्ट्रपति भेट्न पुगे । प्रधानमन्त्रीले आफू ओलीलाई प्रधानमन्त्री बनाउन तयार भएको सुनाएकै थिए । बाँकी समय ढुक्कले प्रधानमन्त्री चलाउने आश्वासन पाएका प्रचण्ड आफैँ ओलीको 'सामान्य भुक्क'मा परे । सत्ताबाट अहिलेसम्मै सबैभन्दा बढी अपमानित ढंगले लघारिए । यो घाउको चोटले उनलाई कति वर्ष सताउँछ थाहा छैन । जबकि मधेशमा उपेन्द्र यादव र देशमा प्रचण्डको अझै केही समय शक्ति चल्छ भन्ने विश्वास एकसाथ ढलेको मात्रै छैन, दुवै सँगै हुन नसक्ने गरी ढलाइएका छन् । यसमा पात्र एकै छन् । खुशी हुने अनेक शक्ति छन् । पछिल्लो समय दक्षिणको शक्ति उपेन्द्रसँग यति धेरै चिढिएको पाइएको छ कि, उनीहरूको आवाज कुनाकन्तराबाट सुनिने गरेको छ, 'उसका और बुरा हाल हुनेवाला है !'

तर यहाँ त उपेन्द्रकोभन्दा पनि प्रचण्डकै हालत खराब बनेको छ । मधेशमा परीक्षणमा रहेको जनमत, ओलीसँगै हिमचिम भएका अशोक राई, प्रदीप यादवहरूलाई अझ एमालेसँग मिलाउने गरी उपेन्द्रको पार्टी विभाजन, त्यतिले नपुगेर नेकपा एसलाई एकथान मुख्यमन्त्री, जनमतलाई उपप्रधानमन्त्री र मुख्यमन्त्री, हुँदाहुँदा रञ्जिता श्रेष्ठलाई पनि मन्त्री बनाउँदा पनि असुरक्षित हुने कस्तो गठबन्धन रोजे प्रचण्डले कांग्रेस छाडेर ? यसको समीक्षा हुने कि नहुने ? माओवादीमा अचेल पदाधिकारी बैठक, केन्द्रीय कमिटी बैठक र सचिवालय बैठक हावी छ । सायद नयाँ पुस्ताका माओवादीले नै बिर्से होलान्, चुनबाङ बैठक, पालुङटार बैठक, खन्ना गार्मेन्टमा भेला । यी नाम सुन्दै आङ जिरिङ्ग हुने भेला र बैठक छाडेर बालुवाटार बैठक माओवादीका लागि पनि हानिकारक थियो नै, प्रचण्डको अहिलेसम्मको राजनीतिक छविको त्रिपालसमेत उडाएर प्रचण्डबाट सिधै छविलाल दाहालमा झारिदिन ओली सफल भएका छन् ।

ओली यस्ता पात्र हुन्, इगो देखाउँदैनन् । पाएका बेला प्रयोगमार्फत जवाफ दिन्छन् । ५० को दशकतिरको एउटा घटना सुनाएर बिट मार्न चाहें । रौतहटको चन्द्रनिगाहपुर होटलमा केपी ओली पुगेका थिए । सायद उनी युवासंघको अध्यक्ष भएकै बेलाको कुरा होला । उनी बसेको होटलको टेबलमा त्यहाँका लोकल कर्मचारीको बसिबसाउ हुने रहेछ । त्यो दिन ओली बसेको देखेपछि ती रैथाने दादाले होटलवालालाई थर्काए रे ! आफ्नो टेबलमा अरुलाई राखेको भनेर झगडा गरे रे । ओलीले केही बोलेनन्, पछि होटलवालासँग उनको हुलिया, परिचय टिपे । जब ओली सत्तामा पुगे, तिनको सरुवा एकाएक रौतहटबाट कर्णालीतिर भएछ । ती दादाले बल्ल थाहा पाएछन्, 'सरुवा गर्ने मान्छे त्यही कुर्सी टेबलमा बसिरहेको मान्छे भनेर ।' यस्ता किस्साहरू प्रदीप नेपाल, वामदेव गौतम, किशोर श्रेष्ठका पनि छन् । अब बस्, तिनै कर्मचारी कर्णाली पठाइए झैँ यसपटक सजिलै ओलीले नेपाली राजनीतिमा असार १६ गते समाजवादीको महाधिवेशनमा समेत 'म प्रचण्ड हुँ' भन्ने पुष्पकमल दाहाललाई पनि लगत्तै राजनीतिको कर्णालीमै पठाइदिएका छन् । यसको हिसाब, क्षतिपूर्ति फेरि पनि संसदीय भासमा देखिएको विकृति, पश्चिमाको उचालपछारमा रुमल्लिने नेपालको राजनीतिक नेतृत्व चीनको अनुदान या ऋणमा असहमतसँगै तत्काललाई भुटानी शरणार्थी र कैलालीको जग्गा प्रकरण अनि गिरीबन्धु चिया काण्ड छोपछाप पनि हो भन्ने बुझ्नुपर्छ । तर सहमतिमा बहुमत मीठा बात छन् । जो प्रचण्डसँग मिलेर पनि एमाले र ओलीले सजिलै पूरा गर्न सक्थे, उनीसँग माधवकुमार नेपाल, सिके राउत, रवि लामिछाने, रञ्जिता श्रेष्ठ, अशोक राईको पनि हस्ताक्षर सुरक्षित थियो । सम्झिराख्नुहोस्, प्रचण्डले जतिसुकै ओली र देउवालाई टाढा राख्न खोजे पनि उनीहरू 'महाकाली सन्धि' र 'एमसिसी'मा सँगै थिए । अब पनि सँगै हुनेछन् ।

ramkumarelan@gmail.com




## सिंहराज खुश हुवा !

*एकै रातमा राजनीति बदलियो । एकाएक के भयो कुन्नि, प्रचण्डको सरकार धरापमा । केपी शर्मा ओली र शेरबहादुर देउवाबीच भएको 'रात्रि-सम्झौता' ले बिहान हुँदासम्म प्रचण्डको सरकार धरापमा परिसकेको अवस्था । राजनीतिमा आएको यो परिवर्तनले सिंहराज खुशी छ । किनभने यो परिवर्तनले 'शेर'लाई पनि अघि ल्याएको छ । बिचरा शेर आफू शेर भएर पनि राजनीतिमा मुसाको हैसियतमा बसिरहेको थियो । यसले सिंहराजलाई दुःखी बनाउनु स्वाभाविक थियो । तर अहिले स्थिति बदलिएको छ । शेर पुनः चल्मलाउन थालेको छ । यो राम्रै कुरा हो । तर शेर अब जंगलमा गएर चल्मलाउने हो वा सर्कसमा गएर तन्किने हो त्यो भने हेर्न बाँकी छ । किनभने अहिले दृश्यमा एकातिर शेर टाउको उठाएर गुर्रर...कराउन थालेको सुनिन्छ भने अर्कोतिर सँगै कुनातिर केपी शर्मा ओली सर्कसको चाबुक लिएर उभिइरहेको देखिन्छ ।*

*अब जहाँसम्म राजनीतिको कुरा छ, राजनीति भनेको त परिवर्तनको नाम हो । राजनीतिमा सरकार परिवर्तन भइ नै रहेको हुन्छ । किनभने सरकार सबैलाई चाहिन्छ । प्रचण्डलाई लडाकू शिविरको फाइल बन्द गर्न सरकार चाहिन्छ, ओलीलाई गिरिबन्धुको फाइल बन्द गराउन सरकार चाहिन्छ, देउवालाई नकली भुटानी शरणार्थीको फाइल बन्द गराउन सरकार चाहिन्छ, रविलाई सहकारी घोटालाको फाइल बन्द गराउन सरकार चाहिन्छ । जनतालाई चाहिँ भ्रष्टाचार, महँगी, अराजकता, ढिलासुस्ती, गुण्डागर्दी, बेथिति, अव्यवस्था बन्द गराउन सरकार चाहिन्छ । कर्मचारीलाई प्रमोशन खान सरकार चाहिन्छ, एनजिओलाई बजेट ल्याउन सरकार चाहिन्छ, ठेकेदारलाई ठेक्का पाउन सरकार चाहिन्छ, गुण्डालाई गुण्डागर्दी गर्न सरकार चाहिन्छ, विदेशीलाई चलखेल गर्न सरकार चाहिन्छ । सरकार नचाहने को होला ? सरकार सबैलाई चाहिन्छ । यस्तो अवस्थामा ओली र देउवाले सरकार खोजे भनेर किन होहल्ला ?*

### बालेन र चार शहीद

*काठमाडौंका मेयर बालेन्द्र साहजीलाई मदन भण्डारी मन नपर्ने, बीपी कोइराला पनि मन नपर्ने । किन मन पर्थ्यो र ! उनीहरूले स्वतन्त्र भएर एक्ला एक्लै चुनाव लड्ने व्यवस्थालाई ढालेर पार्टी-पार्टी लड्ने व्यवस्था जो ल्याएका थिए । पार्टी भनेपछि फेरि बालेन्द्रलाई झोंक चलिहाल्ने । पार्टी त न महेन्द्रलाई मन पर्थ्यो, न वीरेन्द्रलाई मन पर्थ्यो, न ज्ञानेन्द्रलाई मन पर्थ्यो, न बालेन्द्रलाई नै मन पर्छ । त्यसैले जसले पार्टीको व्यवस्था ल्याए तिनलाई किन मान्ने ? बालेन्द्रलाई बीपी र मदन होइन, चार शहीद मन पर्छ रे ! शहीद गंगालाल श्रेष्ठ, शहीद धर्मभक्त माथेमा, शहीद दशरथ चन्द, शहीद शुक्रराज जोशी । त्यसैले कार्यक्रमै गर्नुपरे बीपी र मदनको नाममा होइन, चार शहीदको नाममा गरौं रे ! बालेन्द्र साहको यो प्रस्ताव सुनेर शहीदहरू आफैँ पनि छक्क परेको हुनुपर्छ । अरुको त कुरै छोडौं । काठमाडौं महानगरपालिकामा बालेन्द्र साह मेयर भएर आएपछि दुइटा शहीद दिवस गइसके । तर उनी ती कुनै पनि शहीद दिवसमा गएनन् । शहीद दिवस मनाउँदा चार शहीदको प्रतिमास्थलमा गएर पुष्प अर्पण गरिन्छ । बालेन्द्र साह एउटै पनि शहीदको प्रतिमास्थलमा गएनन् । जसले शहीद दिवसमा त शहीदलाई सम्झेन उसले शहीदबाहेक अरुको नाममा कार्यक्रम गर्न पाइँदैन भनेको सुन्दा को पो छक्क नपर्ला ? (धन्य बालेन्द्र साहले शहीदको नाम लिए, यम बुद्धको नाम लिएको भए अर्को आपत आइपर्थ्यो ।) आखिर यतिबेला बालेन्द्र साहजीलाई किन शहीदको सम्झना भएको होला ? जुन बेला सम्झिनुपर्ने हो त्यो बेला त एक थुंगा फूल चढाउन पनि नआउने । अहिलेचाहिँ चार शहीद महान भनेर स्टाटस लेखेको देख्दा मान्छे छक्क नपरी बस्लान् ?*

# मोदीले टेकेको नेपाली भूभागमा के गर्ला भारतले

नेपालसँग सीमा जोडिएको भारतको उत्तराखण्डका मुख्यमन्त्री पुष्करसिंह धामीले प्रधानमन्त्री नरेन्द्र मोदीसँग गुञ्जीलाई अन्तर्राष्ट्रिय पर्यटन गन्तव्य बनाउन माग गरेका छन् । असार ७ गते गुञ्जीक्षेत्रको अन्तर्राष्ट्रिय योग दिवसमा सहभागी भएका धामीले दिल्ली पुगेर असार ११ गते मोदीसँग भेटवार्ता गरेका हुन् । एक दिनअघि हेलिकोप्टरमार्फत गुञ्जी पुगेका धामीले असार ६ गतेको रात नाभीगाउँको होमस्टेमा बिताएका थिए । अतिक्रमित नेपाली भूमिमा रहेका कुटी, नाभी र गुञ्जी गाउँको वस्तुस्थितिबारे ब्रिफिङ लिएका मुख्यमन्त्रीले प्रधानमन्त्री मोदीसँग तत्कालै भेटेर यसक्षेत्रको विकासका लागि छलफल गरेका छन् । 'पिथौरागढ जिल्लास्थित सीमावर्ती गाउँ गुञ्जी (आदि कैलाश क्षेत्र)लाई अन्तर्राष्ट्रिय पर्यटन डेस्टिनेशनको रूपमा विकास गर्न मोदीसँग छलफल गरिएको' भारतीय पत्रिका हिन्दुस्तान दैनिकले लेखेको छ । असार ११ गते भएको मोदीसँगको भेटमा धामीले उत्तराखण्ड राज्य सरकारले गुञ्जीक्षेत्रको पर्यटन विकासका लागि गुरुयोजना तयार गरिसकेको जानकारी पनि दिएका छन् ।

नेपालले लिम्पियाधुरासम्मको क्षेत्रलाई आफ्नो भूमि भएको दाबी गर्दै नयाँ नक्सा प्रकाशित गरेको छ । तर, नेपालले दाबी गरेको समग्र क्षेत्रलाई भारतले अन्तर्राष्ट्रिय पर्यटन गन्तव्य बनाउने तयारी थालेको छ । लिम्पियाधुरा नजिकको आदि कैलाश पर्वत र पार्वती सरोवरसम्म अहिले दैनिक हजारौं तिर्थयात्रीले भ्रमण गरिरहेका छन् । गत असोज २५ गते मोदी यसक्षेत्रमा आएका थिए । उत्तराखण्डका मुख्यमन्त्री धामी त्यतिबेला पनि मोदीसँगै गुञ्जीक्षेत्र पुगेका थिए ।

मोदीकै निर्देशनमा गुञ्जीक्षेत्रको पर्यटकीय विकास गर्न गुरुयोजना तयार गरिएको चर्चा छ । कहाँ, कस्तो संरचना बनाउनेसम्मको सुझाव र निर्देशन मोदीले दिएका छन् । सन् १९९० को दशकमा कैलाश-मानसरोवर यात्रा गर्ने क्रममा मोदीले यसक्षेत्रको पैदल भ्रमण गरेका थिए । कालापानीभन्दा केहीमाथि नाभीढाँगबाट दर्शन गर्न सकिने ॐ पर्वतको पर्यटकीय विकासलाई पनि गुरुयोजनामा समेटिएको छ । गुञ्जीबाट २२ किलोमिटरको सडक दूरीमा नाभीढाँग पर्दछ । व्यास गाउँपालिकाको वडा नम्बर १ तिंकर गाउँको सिरानक्षेत्रमा रहेको ॐ पर्वतसम्म भारतीय सुरक्षाकर्मीले अतिक्रमण गरेका छन् । उत्तराखण्डका मुख्यमन्त्री पुष्करसिंह धामीले कुमाउँ मण्डलमा रहेका ४८ वटा मन्दिरहरूको संरक्षण र विकासका लागि १ हजार करोड रुपैयाँ उपलब्ध गराउन केन्द्र सरकारसंग माग गरेका छन् । मानसखण्ड क्षेत्रमा पर्ने ४८ वटा मन्दिरमध्ये १६ मन्दिरमा संरक्षण र विकासको कार्य थालिएको भारतीय सञ्चारमाध्यमले जनाएका छन् । आदि कैलाश र ॐ पर्वत दर्शनका लागि हेलिकोप्टर सेवा सञ्चालनको गृहकार्य पनि राज्य सरकारले गरेको छ । धारचुलादेखि गुञ्जी हुँदै जोलिङकाङसम्मको १ सय २५ किलोमिटर लामो सडक निर्माण सम्पन्न भइसकेको छ । अधिकांश ठाउँमा सडक कालोपत्रे भएसँगै अहिले दैनिक ३ सयभन्दा बढी पर्यटक गाडी जोलिङकाङ र ॐ पर्वत दर्शनका लागि पुगिरहेका छन् ।

टनकपुर नजिकको पूर्णागिरी मन्दिरदेखि कुमाउँ क्षेत्रका सबैजसो प्रमुख मन्दिरहरूको एकीकृत विकास गर्ने राज्यसरकारको योजना छ । चीनको तिब्बतमा अवस्थित कैलाश-मानसरोवरसम्मको तिर्थयात्रा २०१९ देखि बन्द छ । कोभिड महामारीले लिपुलेक नाका बन्द भएपछि हालसम्म खोलिएको छैन । चीन र भारतबीच सीमाक्षेत्रको तनाव र सैन्य टकरावले पनि कैलाश मानसरोवर यात्रा खुल्न सकेको छैन । पवित्र कैलाश मानसरोवर यात्राको विकल्पमा भारतीय प्रधानमन्त्री नरेन्द्र मोदीले गुञ्जी क्षेत्रलाई धार्मिक पर्यटन गन्तव्य बनाउन थालेका छन् । गुञ्जीसहित सीमाक्षेत्रका आधा दर्जन गाउँहरूलाई समेटेर भाइब्रेन्ट भिलेजको रूपमा विकास गरिँदैछ । सडक, सञ्चार, हवाइ सेवा, खानेपानी, शौचालय, होमस्टे लगायतका क्षेत्रमा भारत सरकारले लगानी गरिरहेको छ । गुञ्जी र जोलिङकाङ क्षेत्र जोड्नेगरी उच्च हिमालय क्षेत्रमा सुरुङ निर्माणको अध्ययन पनि थालिएको छ । धारचुला तहसिलअन्तर्गत बुँदी गाउँदेखि गुञ्जीछेउमा नपलच्यु गाउँ जोड्ने करिब ५ किलोमिटर सुरुङ निर्माण हुने चर्चा छ । त्यसैगरी, व्यास घाटी र दारमा घाटी जोड्ने गरी बेदांगदेखि जोलिङजाङसम्मको सुरुङमार्ग निर्माणका निम्ति गृहकार्य भइरहेको छ ।

*- शंकरसिंह धामी*

# ओइ केटी, कान सुन्दिनस् ? बाटो छाड् !



वैकुण्ठ ढकाल

शिक्षकको व्यवहार : म छोराछोरी लिन विद्यालय हरेक दिन (बिदाको दिन बाहेक) आउँछु । त्यो दिन एक जना म्यामले स्कुटर निकाल्नुभयो । चर्को गरी हर्न बजाउनुभयो । अनि चिच्याउनुभयो- ओई केटी ! कान सुन्दिनस्, बाटो छाड् । मलाई निकै असहज लाग्यो । पाले दाइको मुख पनि रातो भयो । मैले नसुनेजस्तो गरेर मुन्टो बटारें । अनि झट्ट नेपाली उखान सम्झेँ- .....लाई भन्दा देख्नेलाई लाज भनेको यही हो ।

कम्तीमा ती शिक्षिकाले नानी बाटो छोड् भनेकी भए निकै खुशी हुन्थें । कृपया शिक्षकहरू, हाम्रा नानीबाबुलाई स्योस् नलगाउनुहोस्, कम्तीमा तिमी त भनिदिनुस् । आफ्ना बालबच्चालाई घरमा मायाले तिमी नै त भन्नुहुन्छ होला नि ?

**पिट्न हुन्छ/हुँदैन**

एक अभिभावक-मेरा छोराछोरीमाथि हात हाल्ने अधिकार कसले दियो तपाईंहरूलाई । मेरो बालबालिकालाई हात लगाउनु त परको कुरा, ठूलो स्वर पनि नगर्नुहोला ।

प्रतिकारमा अर्का अभिभावक- मेरा बालबालिकालाई कुट्नुहोस्, तर मार नपरोस् । बालबालिकालाई डर पनि देखाउनुपर्छ । त्यो भनेको प्याट्टपुट्ट नै हो ।

**गुगल सर्च गर्ने/नगर्ने**

सर-म्यामहरूले विद्यार्थीलाई गुगल सर्चका लागि दुरुत्साहन नगर्नुहोला । विद्यार्थीको सिर्जनशीलता, मौलिकता किन मार्दै हुनुहुन्छ ? मेरी छोरी गुगल सर्च नगरी होमवर्क नै गर्दिनन् । विशेषगरी सामाजिक विषयमा । विज्ञानमा पनि ।

अर्को अभिभावकको प्रतिकार- विज्ञान प्रविधि र सूचना प्रविधिको युगमा त्यसको प्रयोग नगरे त प्रविधिमा पछि परिन्छ । यसको प्रयोगमा प्रोत्साहन गर्नुपर्छ । गुगल सर्च प्रोत्साहन हो कि दुरुत्साहन ?

**निजीबाट सरकारी स्कूल**

भेलामा ज-जसले भनाइ राखे ती सबैजसोले निजी विद्यालयबाट आफ्ना छोराछोरीलाई निकालेर ल्याएका थिए । विद्यार्थीहरू पढाइमा सन्तुष्ट, अभिभावक पनि मख्ख । धारणा राख्ने सबैको साझा गुनासो होमवर्क र डायरी चेक नभएकोमा थियो । यसलाई अनिवार्य गर्न अभिभावकको ध्यानाकर्षण गराए । अभिभावकको अर्को साझा गुनासो, विद्यालयमा अतिरिक्त क्रियाकलाप नभएकोमा थियो । यसको व्यवस्थापनमा विद्यालय प्रशासन/व्यवस्थापन समिति र स्थानीय सरकारको ध्यानाकर्षण गराए ।

**हाम्रा नानीबाबुलाई स्योस् नलगाउनुहोस्, कम्तीमा तिमी त भनिदिनुस् । आफ्ना बालबच्चालाई घरमा मायाले तिमी नै त भन्नुहुन्छ होला नि ?**

विद्यालयमा खानेपानी र शौचालय अभाव छ । पिसाब लाग्ने डरले मेरी छोरी घरबाट ल्याएको एक बोतल पानी पनि फिर्ता ल्याउँछिन् । किन भनेर प्रश्न गर्दा- स्कूलमा शौचालय जान पर्दा समस्या हुन्छ । कहिलेकाहीँ खाजाको सरसफाईमा पनि कैफियत देखियो ।

यो कक्षा आठमा पढ्ने विद्यार्थीको अभिभावक भेलामा आएका प्रतिनिधिमूलक धारणा हुन् । विद्यालय मात्रै हैन पूरै समाजमा बालबालिकालाई पिट्न हुन्छ हुँदैन, गुगल सर्च गर्न हुन्छ हुँदै, तँ भन्ने नभन्ने, सरकारी स्कूलमा पढाई राम्रो कि निजीमा भन्ने बहस र विवाद भइरहेकै हुन्छ । विद्यार्थीलाई कस्तो बनाउने र कस्तो संस्कार दिने भन्ने कुरा पहिलो, घर परिवार र दोस्रो घर विद्यालयबाट निर्धारण हुन्छ । त्यसपछि समाज र सरसंगतले निर्धारण गर्छ । खराब आचरण र व्यवहारबाट बालबालिकालाई जोगाउन परिवार, विद्यालय, समाजको आ-आफ्नै र विशिष्ट भूमिका हुन्छ । त्यो भूमिका निर्दिष्ट छन् । त्यसलाई सबैले पूरा गर्नुपर्छ ।

भेलामा केही अभिभावकले बालबालिका भनेको पटक्कै मान्दैनन् भन्ने गुनासो पनि गरे । छोराछोरी मोबाइल चलाउन, मोबाइल-कम्प्युटरमा खेल खेल्न र कार्टुन हेर्न मात्र खोज्छन् । सामाजिकीकरण पटक्कै छैन । एक्लै कोठामा बस्ने र मोबाइलमा रमाउने उनीहरूको दिनचर्या हुन्छ । बाहिर हिँड्न र घरायसी काममा सघाउन खोज्दैनन् । घरमा आएका परिचित वा नयाँ मानिससँग बोल्दैनन् । गृहकार्यमा रुचि छैन । शिक्षकको आँखा छल्न सामाजिक सञ्जालमार्फत जान्ने साथीको गृहकार्य सार्ने वा एपहरूको उत्तर जस्ताको तस्तै उतार्ने क्रम बढेको छ । अन्तरक्रियात्मक तथा तार्किक क्षमता कमजोर छ । सामाजिक अन्तरक्रियामा रुचि छैन । सबका सबले गुनासो मात्रै गरिहेका हुन्छन् । त्यसको कारण के हो भन्नेको खोजी हुँदैन । समस्याको कारण के हो भन्ने पहिचान गरी समाधान खोज्नु कसरी ?

# किनेर पाइने यस्तो सम्मानको के काम ?

कुनै पनि क्षेत्रमा उत्कृष्ट योगदान पुऱ्याउनेलाई सम्मानस्वरूप 'अवार्ड' दिइन्छ । अवार्ड दिनुको उद्देश्य त्यस क्षेत्रमा थप योगदान पुऱ्याउन प्रोत्साहन गर्नु हो । तर, पछिल्लो समय अवार्ड दिने होडबाजी नै चलेको छ । मुलुकमा बर्सेनि दर्जनौं 'अवार्ड शो' आयोजना गरिन्छ । चलचित्र, शिक्षा, बैंक तथा वित्तीय संस्था, पर्यटनसम्बद्ध अवार्ड सबैभन्दा धेरै आयोजना हुने गरेको छ ।

अवार्ड समारोह बढिरहेको छ तर अवार्ड पाउनेले गर्व गर्न सक्ने स्थिति छैन । पैसामा अवार्ड बाँडेको विषय पनि सतहमा आइरहेका छन् । यता, सरकारले बाँडेको अवार्डमा समेत सन्तुष्ट हुन सक्ने अवस्था छैन । अवार्ड किनबेचको विषयलाई लिएर बेलाबखत प्रश्न उठ्ने गर्छ । केही वर्षअघि एउटा विदेशी कम्पनीले नेपालमा अवार्ड समारोह आयोजना गरेको थियो । एउटै विधामा दुइटा कम्पनीले अवार्ड पाएपछि विवाद भयो । अनुसन्धान गर्दै जाँदा किनेको खुल्यो । हालै मात्र भृकुटीमण्डपमा आयोजित अवार्ड समारोह सरकारले बन्द गराएको छ । स्वीकृतिबिना गर्न लागिएकाले हस्तक्षेप गरिएको हो । विदेशमा आयोजित अवार्ड समारोहमा पनि नेपालीहरू सहभागी हुँदै आएका छन् । शिक्षालय राष्ट्रिय मासिकले केही दिनअघि शिक्षासम्बन्धी अवार्ड समारोह गरेको थियो ।

एक साताको 'थाइल्याण्ड एण्ड कम्बोडिया एजुकेशन टुर' र 'थर्ड इन्टरनेशनल एजुकेशन अवार्ड, २०२४' मा सहभागी हुन यहाँबाट २८ जनाको टोली त्यता गएको थियो । ३१ जेठमा गएको टोली फर्किएको छ । टुरमा गएकामध्ये २५ जनालाई सम्मान गरिएको जनाइएको छ । शिक्षालयका प्रधानसम्पादक श्याम तण्डुकारका अनुसार तीन वटा विषयलाई ध्यानमा राख्दै अवार्डका लागि योग्य व्यक्ति छनोट गरिएको हो । कुनै पनि अभियोग नलागेको, एउटै पेशामा आबद्ध र शिक्षाप्रति समर्पित व्यक्तिलाई सम्मान गरिएको उनले जानकारी दिए । त्यसका लागि राज्यले नमुना घोषणा गरेका विद्यालयलाई आधार लिइएको उनको भनाइ छ । त्यस्तै, प्याब्सनका पदाधिकारीलाई पनि सम्मान गरिएको उनी बताउँछन् । सबै जना आफ्नै खर्चमा गएको तण्डुकारले बताए । 'हाम्रो साथीहरू हुनुहुन्थ्यो । उहाँहरूले नै टुरको व्यवस्थापन मिलाउनुभएको हो । त्यहाँका विद्यालयमा नेपाली विद्यार्थी पनि अध्ययन गर्नुहुन्छ । थाइल्याण्डमा एशिया इन्स्टिच्युट अफ टेक्नोलोजीको भ्रमण गऱ्यौं । उहाँहरूले त्यहाँ खाने-बस्ने व्यवस्थापन मिलाउनुभएको थियो । टुरको खर्च सबै जनाले आफैं व्यहोर्नुभएको हो', उनले भने ।

सो टोलीमा नेपाल सरकारका उपसचिव गेहनाथ गौतम पनि थिए । त्यस्तै, कम्बोडियाका फ्यासिलिटेटर प्रोफेसर डा. श्रीरामभगत् माथे, कम्बोडियाका एनआरएनए अध्यक्ष लालसिंह खड्कालगायत भ्रमणमा सहभागी थिए । उपसचिव गौतमले भने आफू औपचारिक रूपमा नगएको बताए । 'म फर्मल्ली सहभागी भएको होइन । आफ्नै खर्चमा गएको हुँ', उनले भने । यता, शिक्षा, विज्ञान तथा प्रविधि मन्त्रालयले अवार्ड समारोहबारे केही जानकारी नभएको जनाएको छ । मन्त्रालयका सूचना अधिकारी शंकर अधिकारी भन्छन्, 'अवार्ड समारोहबारे मन्त्रालयलाई कुनै जानकारी गराइएको छैन । गौतम जानुभएकोबारे पनि थाहा भएन ।' विदेशी भूमिमा भव्य रूपमा भएको अवार्ड समारोहको विषयमा सरोकारवाला निकायलाई नै जानकारी नहुनु आश्चर्यजनक छ । जसकारण सो अवार्ड समारोह पनि अवैधानिक त होइन ? भन्ने प्रश्न खडा भएको छ ।



**यहाँबाट कम्बोडिया जाँदा पाँच लाख रूपैयाँ बराबर खर्च हुन्छ । एउटा अवार्ड लिन त्यत्रो खर्च गरेर जानु त विदेशबाट पार्सल ल्याउनुसरह भएन र !'**

**समारोह सञ्चालनको मापदण्ड के ?**

काम गर्नलाई हौसला प्रदान गर्ने भएकाले अवार्ड समारोह हुनु सकारात्मक छ । अवार्ड वितरण सधैँ पारदर्शी हुनुपर्छ । पहिले-पहिले अवार्डको निकै मान्यता हुन्थ्यो । रौनकता पनि आउँथ्यो । अवार्ड पाउनेको चर्चा राष्ट्रिय-अन्तर्राष्ट्रिय स्तरमा हुन्थ्यो । अवार्डले मानसम्मान दिलाउँथ्यो । अहिले अवार्ड पाउनेले नै त्यसको कदर गरेको पाइँदैन । जसकारण अवार्ड देखावटी फेसन बनेको महसुस हुन्छ । राम्रोलाई भन्दा पनि हाम्रोलाई अवार्ड दिने गरेको गुनासो बढेको छ । यता, अवार्ड समारोह सञ्चालनको मापदण्ड कहीँ-कतै उल्लेख भएको पाइँदैन । जसले गर्दा यो कार्यक्रम अमर्यादित र बद्नाम बनेको छ । मापदण्ड नहुँदा आयोजकले अवार्ड समारोहको नाममा मनोमानी गर्न थालेका छन् । अवार्ड पाउने 'क्राइटेरिया' के ? उसले अवार्ड पाउन कस्तो योगदान पुऱ्यायो ? समाजमा त्यसले कस्तो खालको प्रभाव पाऱ्यो ? यी विषयमा अध्ययन नगरिकन हचुवाको भरमा अवार्ड वितरण भइरहेको छ ।

एक सरकारी अधिकारीका अनुसार अवार्ड समारोहका लागि सम्बन्धित मन्त्रालयबाट स्वीकृति लिनुपर्छ । 'यसका लागि ठ्याक्कै यो मापदण्ड भन्ने त छैन । अवार्ड के सम्बन्धमा हो, सम्बद्ध मन्त्रालयबाट स्वीकृति लिनुपर्छ । शिक्षा हो भने शिक्षा मन्त्रालय, पर्यटनसम्बन्धी हो भने संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालय, आइटीसम्बन्धी हो भने सञ्चार तथा सूचना प्रविधि मन्त्रालयबाट स्वीकृति लिनुपर्छ', ती अधिकारीले भने ।

**मानव तस्करीको भय**

सांगीतिक कार्यक्रमको बहानामा विदेशी भूमिमा लगेर बन्धक बनाएको खबरहरू बेलाबखत सार्वजनिक भइरहेको हुन्छ । अवार्ड कार्यक्रमको नाममा पनि त्यस्तै बेथिति मौलाउने त होइन भनेर चिन्ता प्रकट गर्न थालिएको छ । कम्बोडिया र थाइल्याण्डमा नेपालीलाई बन्धक बनाएको घटना धेरै आइरहेको हुन्छ । आकर्षक रोजगारीको प्रलोभनमा भिजिट भिसामा कम्बोडिया र थाइल्याण्ड पुऱ्याएर नेपालीलाई बन्धक बनाउने गरिन्छ । कम्बोडियाको आगलागी घटनामा परेर गत वर्ष एक जना नेपालीको ज्यान गएको थियो । नेपाली युवालाई भिजिट भिसामा कम्बोडिया पुऱ्याएर 'मानव दास' का रूपमा बिक्री गरिन्छ । त्यसैले विदेशमा यस्ता कार्यक्रम गर्दा प्रश्नको ओइरो लाग्ने गरेको छ ।

**अवार्ड कि पार्सल ?**

अवार्डको नाममा ठगीधन्दा मौलाएको व्यापक गुनासो छ । अवार्ड विदेशबाट पार्सल ल्याउनुसरह भएको जानकारहरू बताउँछन् । विदेश जाँदा हुने लाखौंको खर्चले मोल तिरेर अवार्ड किनेझैं भएको उनीहरूको जिकिर छ । 'अवार्ड भन्ने कि पार्सल ! यहाँबाट कम्बोडिया जाँदा पाँच लाख रूपैयाँ बराबर खर्च हुन्छ । एउटा अवार्ड लिन त्यत्रो खर्च गरेर जानु त विदेशबाट पार्सल ल्याउनुसरह भएन र !', एक अधिकारकर्मीले भने । त्यस्तै, अवार्ड लिन जानेले रकम कताबाट जुटाए ? यसको पनि छानबिन हुनुपर्ने उनीहरूको माग छ ।

**भारतीयको सिको सिक्दै नेपाली**

बलिउडमा अवार्ड खरिदबिक्री भएको व्यापक सुनिन्छ । यता, शिक्षासम्बद्ध अवार्डसमेत किनबेच हुने गरेको बताइन्छ । भारतमा दर्ता नभएको एक विश्वविद्यालयले ५१ हजार नेपाली रूपैयाँ लिएर 'मानार्थ पिएचडी' बाँड्न लागेको खुलेपछि शिक्षा मन्त्रालयले रोक लगाएको छ । शिक्षामन्त्री सुमना श्रेष्ठले सो कार्यक्रममा प्रतिबन्ध लगाएकी हुन् । पर्यटन बोर्डको हलमा गर्न लागिएको उक्त कार्यक्रममा अनपढलाई पनि मानार्थ पिएचडी दिन लागिएको थियो । यता, सो विश्वविद्यालयले शिक्षा मन्त्रालयबाट पनि स्वीकृति नलिएको पाइएको छ । नेपालका विभिन्न निजी संघसंस्थाले पनि सो सिकिरहेको देखिन्छ ।

# गोकुलमाथि ओलीको गाली, भण्डारीको मल्हम

एमाले अध्यक्ष केपी ओलीले नाम नलिइकन शब्दद्वारा काभ्रे जिल्ला अधिवेशनको उद्घाटनका बेला जेठ २८ गते झापड हानेका गोकुल बाँस्कोटालाई पूर्वराष्ट्रपति विद्यादेवी भण्डारीले मल्हम लगाएकी छन् । मदन जयन्तीका अवसरमा असार १४ गते धुलिखेलमा आयोजित कार्यक्रममा भण्डारीले बाँस्कोटाको खुलेरै प्रशंसा गरिन् ।

ओलीले केही वर्षअघिसम्म धर्मपुत्रझैं ठानेर बालकोटको घर जिम्मा लगाएका, आफू प्रधानमन्त्री हुँदा पार्टीको केन्द्रीय सदस्यसमेत नहुँदै पहिलो पटक संसद प्रवेश गरेका बाँस्कोटालाई मन्त्री बनाए । धेरैले त्यतिबेला भनेका थिए- केपी ओलीको भण्डारे । बाँस्कोटाको उचाइ एकाएक उक्सियो । मन्त्री भएपछि उनको कडा बोली, सरकारको प्रतिरक्षा गर्ने शैली तथा कामबाट खुशी नै थिए ओली । धुलिखेल नगरपालिकाको स्थापना दिवसका दिन आएर भने पनि, 'एकातिर सबै मन्त्री, अर्कोतिर गोकुल बाँस्कोटा ।'

त्यसो भनेकै केही दिनमै बाँस्कोटाले छाडा बोलेको र ७० करोड बार्गेनिङ गरेको टेप कांग्रेसनिकट पत्रकारले सार्वजनिक गरे । र, उनले नैतिकता देखाउँदै राजीनामा दिए । प्रचण्ड र सभामुख अग्नि सापकोटा उनका विरोधी थिए । यसर्थ उनी संसद नपुग्दै सभामुखले राजीनामा आइसक्यो भनिदिए । अघिल्लो मन्त्रिपरिषद्का केही मन्त्री भ्रष्टाचार आरोपमा पटक-पटक मुछिएका प्रमाण सार्वजनिक हुँदा पनि नैतिकता देखिएन । एमालेका शेरबहादुर तामाङ त्यस्तै बोलीको शिकार बन्न पुगे । बाँस्कोटालाई सिध्याउन सके मात्रै आफ्नो राजनीति सहज देखेका कांग्रेस नेता अहिले चुपचाप छन् । तर, ओली-बाँस्कोटा सम्बन्धमा आएको दरार छरपष्ट भएसँगै जिल्लामा खासखुस बढेको छ । विद्यालाई ल्याएर तुजुक देखाएको भन्दै बाँस्कोटाको आलोचना शुरु भएको छ ।

**'एमाले मिलाउन सकिन'**

धुलिखेलमा आयोजित जननेता मदन भण्डारीको ७३ औं जन्मजयन्ती समारोहमा विद्यादेवीले राजनीतिलाई व्यवसायका रूपमा नलिन आग्रह गरिन् । 'मैले राष्ट्रपति हुँदा एमालेभित्रको विवाद मिलाउन प्रयत्न गरेँ । त्यो एमालेका लागि थिएन, राष्ट्रका लागि थियो । तैपनि सम्भव भएन । किन झगडा गर्नु ? घरभित्रको झगडा । पार्टीभित्रको झगडाले देशलाई फाइदा पुऱ्याउँदैन । राजनीति कुनै व्यवसाय नभएकाले जनताद्वारा अनुमोदित हुनुपर्ने व्यवस्था छ', पूर्वराष्ट्रपति भण्डारीले भनिन्, 'आत्मकेन्द्रित भएर नसोचौं । राष्ट्रकेन्द्रित भएर सोचौं । एमाले पटक-पटक विभाजन भएर देशलाई घाटा लागेको छ ।'

**'मदनको बिर्सिएको बर्थडे'**

४१ वर्षको हुनुहुन्थ्यो मदन । ०४८ साल असार १५ गते । दही-चिउरा खाने दिन । अहिले सरकारले त्यस दिनलाई धान दिवसका रूपमा मनाउने गरेको छ । कान्छी छोरी निशाकुशुम भण्डारीको जन्मदिन असार १५ गते हो । छोरी कराउँदै आइन् र भनिन्- मेरो जन्मदिन मनाइदिनुपऱ्यो । त्यतिबेलासम्म जन्मदिन मनाउने चलन थिएन । भर्खरै निर्वाचन सकिएको थियो । मदनले काठमाडौं जिल्ला निर्वाचन क्षेत्र नम्बर १ र ५ बाट जित्नुभएको थियो । पहिला काठमाडौंमा ५ वटा क्षेत्र थिए । अहिलेको संरचनाले पहाडमा निर्वाचन क्षेत्र घटेर तराई र काठमाडौंमा बढेको छ । निर्वाचनमा लामो समय खटेका कार्यकर्ता र स्वयंसेवकलाई घरमा बोलाएर एक दिन खाजा खुवाउनुपर्छ भन्ने सोचेको थिएँ । त्योभन्दा अघि कहिल्यै मदनको जन्मदिन थाहा थिएन । नागरिकता पनि हेरेको थिइन । मागिविवाह हो । खास सोधखोज पनि गरिएन । चुनावका बेला नागरिकताको फोटोकपी पेश गर्नुपर्ने रहेछ । तैपनि, जन्मदिन कहिले हो ? थाहा थिएन । न्वारानको नाम मोतीलाल भण्डारी रहेछ । पछि थाहा पाएँ । मैले छोरीको जन्म दिनको अवसर पारी एकै दिन सबैलाई साँझ घरमा बोलाएँ । हामी सबै खुशी थियौं, यस्तैमा मदनले जिस्कँदै व्यंग्य गरेर भन्नुभयो- 'मेरो पनि हिजो जन्मदिन थियो, कसैले मनाइदिएन ।' साथीहरू नेपालमै पहिलो पटक ब्रह्माको मूर्ति बनाएका छौं, आइदिनुपऱ्यो भन्न थाल्नुभयो । सहभागी भएँ । भूकम्पताका पार्टीले दिएका विभिन्न जिम्मेवारीमा सक्रियतापूर्वक काम गरेको थिएँ । मैले दायित्व भुलेको छैन । भर्खरै एमालेको निर्वाचन भएको थाहा पाएँ । निर्वाचितहरूलाई बधाई । एमालेविरुद्धको गठबन्धन हुँदा पनि गोकुल बाँस्कोटाले जित्नुभयो । उहाँलाई बधाई । बाँस्कोटाले जिल्लाका लागि पुऱ्याएको योगदान धेरै छ ।

२०५० असार १४ गते पहिलो पटक मदनको जन्मजयन्ती मनाइयो । बाँचुन्जेल जन्मोत्सव नमनाएको मदनको जन्मजयन्ती त्यही बेलाबाट शुरु भयो । काठमाडौं महानगरपालिका-१ मा गमलामा ४१ वटा बिरुवा रोपण गरियो । पछिल्लो वर्ष बल्खुस्थित एमाले केन्द्रीय कार्यालय निर्माणका लागि खरिद गरिएको जमिनमा ईश्वर पोखरेल र प्रदीप नेपालसहितको व्यवस्थापनमा वृक्षरोपण गरिएको थियो । यस अवसरमा विविध कार्यक्रम आयोजना गरेकोमा काभ्रे जिल्लालाई धन्यवाद ! एमाले पार्टी अध्यक्ष केपी ओली प्रधानमन्त्री हुँदा असार १४ गतेलाई राष्ट्रिय दिवस घोषणा गरी हरेक वर्ष वृक्षरोपण गर्न थालिएको छ । मदन भण्डारीको जन्मजयन्तीसँग यसको सम्बन्ध छ कि ? जस्तो लाग्छ । हुन त यस विषयमा कुराकानी भएको छैन तर मेरो मनले त्यही भन्छ । असार १४ राष्ट्रिय वृक्षरोपण । उहाँको निधनपछिको पहिलो वर्ष वृक्षरोपण गरेर मनाउन शुरु गरिएको थियो । केन्द्रीय सदस्य रेशम लामाको समूह कार्यक्रममा सहभागी भएन । तर, अध्यक्षमा उठेर पराजित भएका चन्द्र लामाको सबै समूह सामेल थियो ।

# नियम मिचेरै नियुक्ति, चुरेको यो दुर्गति

राष्ट्रपति चुरे तराई मधेश संरक्षण विकास समितिका सदस्य शशीकुमार शर्माले मापदण्डविपरीत नियुक्ति लिएको पाइएको छ । गठन आदेशमा उल्लिखित मापदण्डविपरीत उनलाई जिम्मेवारी दिइएको तथ्य खुलेको छ । महोत्तरी, कोहल्वा घर भई काठमाडौंको धुम्बाराहीमा बस्दै आएका शर्मा एमाले अध्यक्ष केपी शर्मा ओली नेतृत्वको सरकारमा नियुक्त भएका थिए । २०७७ चैत २३ गतेको मन्त्रिपरिषद् बैठकबाट नियुक्त उनको पदावधि पाँच वर्ष तोकिएको छ । तीन वर्ष बिताइसकेका उनको योग्यतालाई लिएर सर्वोच्च अदालतदेखि अख्तियारमा समेत उजुरी परेको बताइन्छ । कार्यविधिमा सदस्यको योग्यता मान्यताप्राप्त विश्वविद्यालयबाट कम्तीमा स्नातकोत्तर तहको उपाधि हासिल गरेको हुनुपर्ने भनिएको छ । त्यस्तै, वन तथा वातावरण वा आर्थिक विकाससँग सम्बन्धित योजना तर्जुमा तथा कार्यान्वयन क्षेत्रमा १० वर्ष अनुभव भएको हुनुपर्ने प्रावधान छ । भनिएको छ, 'मान्यताप्राप्त विश्वविद्यालयबाट कम्तीमा स्नातकोत्तर तहको उपाधि हासिल गरेका र वन वा वातावरण वा आर्थिक विकाससँग सम्बन्धित योजना तर्जुमा तथा कार्यान्वयनका क्षेत्रमा कम्तीमा १० वर्षको अनुभव भएका व्यक्तिहरू मध्येबाट नियुक्त गरिनेछ ।' तर, १० वर्षको अनुभव देखिँदैन । वन मन्त्रालयमा पेश गरिएको अनुभव विवरणमा कक्षा ११ र १२ का विद्यार्थीलाई सातवटा कलेजमा पढाएको मात्र भनिएको छ ।

काठमाडौंको घण्टाघरस्थित त्रिचन्द्र क्याम्पस, ललितपुरको कुमारीपाटीस्थित युनाइटेड एकेडेमी, नयाँ बानेश्वरस्थित ह्वाइटहाउस कलेज, माइतीघरस्थित सेन्ट जेभियर्स कलेज, जाउलाखेलस्थित सेन्ट जेभियर्स कलेज, बत्तिसपुतलीस्थित गोल्डेन गेट कलेज, बानेश्वरस्थित कोलम्बस कलेजमा विभिन्न समयमा अध्यापन गरिएको र त्रिभुवन विश्वविद्यालयबाट माष्टर्स इन साइन्स (इकोलोजी, बायो-डाइभरसिटी, प्यारासिटोलोजी), ललितनारायण मिथिला युनिभर्सिटीबाट ब्याचलर इन बायोलोजी (बोटानी, केमिस्ट्री, जुओलोजी) गरेको देखिन्छ । त्यस्तै, उनले द रोयल सोसाइटी फर दि प्रोटेक्सन अफ बर्ड्स्, बेसलाइन सर्भे अफ बायो-डाइभरसिटी इन सेन्ट्रल चुरे रिजन, स्टडी अफ वाटर ब्रोन डिजिजेज डिउरिङ रेनी सिजन, अ केस स्टडी अफ रातो रिभरलगायत विभिन्न विषयमा अनुसन्धान गरेको रिपोर्ट बुझाएका छन् ।

उनको योग्यतामाथि छानबिनको माग गर्दै रामचन्द्र यादवले गत जेठ २९ गते अख्तियारमा उजुरी दिँदै अहिलेसम्म बुझेको तलब र अन्य सेवासुविधा फिर्ता गराउनुपर्ने बताएका छन् ।



- Study of Water borne Diseases dur'ng rainy season. A case study of Rato River.
- Management of degraded chure hills by soil conservation practices. A case study of Gausala Municipality Mahottari District.
- Study of socio-economic impact of Lakhendehi River during rainy season. A case study of sarlahi district.

Training:

- Research Methodology Training Organized By NHRC, 13th June 2005
- The Parasitological Research Training Workshop Organized By Centeral Department of Zoology, T.U. and parasitological Research and Scio-Enviromental Development (PARASED), Nepal (May 2007)

शशीकुमार शर्मा

भनिएको छ, 'तोकिएको विज्ञताको कार्य अनुभव अयोग्य हुँदाहुँदै तीन वर्षदेखि राष्ट्रिय गौरवको आयोजना चुरे समितिको बोर्ड सदस्यका रूपमा नियमविपरीत रहेकोले यसको छानबिन र गलत देखिए कारबाही गरी हालसम्म खाएको तलब र अन्य सेवासुविधा फिर्तासमेत ल्याइयोस् भनी विनम्र अनुरोध छ ।' त्यस्तै, टेकबहादुर भन्ने व्यक्तिले उनीविरुद्ध गत भदौमा सर्वोच्च अदालतमा मुद्दा दायर गरेका थिए । तर, उनले आर्थिक चलखेल गरेर मुद्दा दायर गर्नेलाई नै आफ्नो पक्षमा पारेको बताइन्छ । मुद्दा दायरकर्ताले नै तीन पटक तारेख छुटाएपछि सो मुद्दा तामेलीमा परेको छ ।

**एउटालाई ऐन, अर्कोलाई चैन**

ऐनकानुन सबैलाई बराबर हुनुपर्छ । एउटालाई सोही कसूरमा सजायँ हुने र अर्कोलाई उन्मुक्ति हुनुहुँदैन । यसअघि राष्ट्रिय प्रकृति संरक्षण कोषका सदस्य सचिव शरदचन्द्र अधिकारीले तोकिएको योग्यता विवाद बढेपछि गत वैशाखमा राजीनामा बुझाएका थिए । संखुवासभाको चैनपुर नगरपालिका वडा नम्बर ३, स्थायी घर भएका अधिकारीको कार्यकाल सकिन डेढ वर्ष बाँकी थियो । तर, योग्यतामाथि प्रश्न उठेपछि खुसुक्क राजीनामा दिन बाध्य भए । उनलाई पनि पूर्वप्रधानमन्त्री ओलीकै पालामा नियुक्त गरिएको थियो । सतर्कता केन्द्रले पदमुक्त गर्न निर्देशन दिएको दुई महिनासम्म अटेर गरेर पदमै बसेका उनी अन्ततः गुमनाम हैसियतमा निस्किए ।

**चुरेबारे पदाधिकारी अञ्जान, चुरेबासीको बेहाल**

हिमालय उत्पत्तिका क्रममा नदीजन्य पदार्थहरू थुप्रिएर बनेको सबैभन्दा कान्छो पहाड चुरे श्रृंखला हो । पूर्व इलामदेखि पश्चिम कञ्चनपुरसम्म ३७ वटा जिल्लामा फैलिएको छ र कूल भूभागको १२ दशमलव ७८ प्रतिशत चुरे क्षेत्रमा पर्छ । पूर्णरूपमा कसिलो नभएको र खुकुलो पत्रे चट्टान भएकाले महाभारतबाट खोला तथा खोल्सीहरू चुरे क्षेत्र भई तराईतर्फ बग्ने गर्छन् । औलो उन्मूलनपछि बल्ल चुरे क्षेत्रमा मानव बस्ती विस्तार भएको हो । वन फडानी, वन पैदावारको अत्यधिक प्रयोग, खुला चरिचरन, अवैज्ञानिक भू-उपयोग आदिका कारण चुरे क्षेत्र उच्च जोखिममा छ । तराईमा पानीको स्रोत सुक्दै छ । सरकारले आर्थिक वर्ष २०६६-६७ देखि चुरे संरक्षणलाई अभियानका रूपमा सञ्चालन गर्न राष्ट्रपति चुरे संरक्षण कार्यक्रम चलाएको छ । चुरेको बारेमा कुनै ज्ञान नभएका व्यक्ति समितिमा बस्दा त्यहाँको हालत झन् खराब बन्दै गएको सहजै अनुमान लगाउन सकिन्छ । चुरेको जथाभावी दोहन र अव्यवस्थापनका कारण बाढी र पहिरोको जोखिम क्रमशः बढेको छ । मधेशमा पानीको हाहाकार छ । पानी माग्दै मधेशबासी काठमाडौं आएका छन् । उनीहरूले संघीय सरकारद्वारा ल्याइएको ढुङ्गा, गिट्टी र बालुवा विदेश निकासी गर्ने विधेयक खारेज गर्न, अतिक्रमणमा परेको चुरे वन क्षेत्रको जग्गा खाली गराउन, क्रसर उद्योग बन्द गर्न पनि भनेका छन् ।

**कमिशन नदिंदा मुद्दा हालियो : शर्मा**

उता सदस्य शर्मा भने मापदण्डबमोजिम आफ्नो नियुक्ति भएको दाबी गर्छन् । 'सरकारले त्यत्तिकै नियुक्त गर्दैन । वन मन्त्रालयले प्रस्ताव गर्छ । त्यसपछि मुख्यसचिवकोमा कहाँ जान्छ । अनि मात्र मन्त्रिपरिषद्मा गएर योग्यता हेरिन्छ । योग्यता नमिलेको भए किन नियुक्त गरिन्थ्यो ? म काम गर्न आएको हुँ तर खुट्टा तान्नेको अभाव छैन,' उनले भने । समितिभित्रकै कर्मचारीले मुद्दा हालेर दुःख दिने गरेको उनले बताए । कमिसन नदिँदा कर्मचारीहरूले आरोप लगाउने, मुद्दा हाल्ने र काम गर्न नदिने गरेको उनको आरोप छ । भन्छन्, 'कर्मचारीले आफूले भनेअनुसार नभएपछि मुद्दा हालेका हुन् । चुरे संरक्षणको विषयमा मैले धेरै अध्ययन गरेको छु । किताब लेखेको छु । मेरो शैक्षिक योग्यता पनि त्यससँग मिल्दोजुल्दो छ ।'

# भाषा शिक्षकहरूमाथि अन्याय भरमार

शिक्षा मन्त्रालयको विद्यालय शिक्षा महाशाखामा कार्यरत सहसचिव केशव दाहालले भाषा शिक्षणको लागि वर्षौंदेखि नेपालमा कार्यरत ५५ जना चिनियाँलाई दुःख र मानसिक यातना दिएका छन् । उनले ती गुरुहरूलाई ओभरस्टे गरेकाले श्रम कानुन आकर्षित भएको भन्दै त्यसबापत प्रतिव्यक्ति ३ लाख ५० हजार रुपैयाँ जरिवाना तिर्दै स्वदेश फर्कनुपर्ने, अन्यथा पक्राउ गरी पठाइने धम्की पीडितहरूले बताएका छन् । नेपाल र चीनबीच भएको सम्झौतामा भीसा नवीकरण गर्दै बस्न पाउने र शैक्षिक क्षेत्रअन्तर्गत चिनियाँ भाषा शिक्षण गरेबापत कुनै वर्कपर्मिट लिनु नपर्ने कानुनी व्यवस्था छ । यी भाषा शिक्षकले स्वयंसेवी रूपमा नेपालका विद्यालय, कलेज र इन्स्टिच्युटमा निःशुल्क अध्यापन गर्दै आएका थिए । पछिल्लो समयमा भने बौद्धिक काम गर्ने विदेशीले पनि अनिवार्य वर्कपर्मिट लिनुपर्ने कानुनी व्यवस्थाको तगारो हालेर चिनियाँ गुरुहरूलाई दुःख दिने काम शुरु भएको गुनासो छ । दुई देशका सरकारबीच भएको सम्झौतामा शिक्षा क्षेत्रको उन्नयनका लागि चिनियाँ शिक्षक वा अध्यापकहरूलाई भिसा लिएर आएपछि वर्कपर्मिट लिन नपर्ने व्यवस्था छ । सो व्यवस्थाबमोजिम नै शिक्षकहरूले नवीकरणका लागि परराष्ट्र मन्त्रालयमा वर्षको एकपटक सम्पर्क गर्दै आएका थिए । तर, शिक्षा मन्त्रालयका कर्मचारी बाठो भएर सो जिम्मेवारी श्रम मन्त्रालयमा सरेको भन्दै नवीकरणका लागि श्रम विभाग पठाएको र सोहीअनुरूप वर्क पर्मिट लिनुपर्ने भनेर दुःख दिएको बारे परराष्ट्रमा लामै छलफल भएको छ ।

केही हप्ताअघि होटल हायातमा चिनियाँ शैक्षिक संस्थाको अगुवाइमा सम्पन्न एजुकेशन फेयरको पनि शिक्षा सहसचिव केशव दाहालले विरोध जनाएका थिए । सो मेलामा ३० वटा विश्वविद्यालय सहभागी थिए । परराष्ट्रमन्त्रीले उद्घाटन गरेको सो कार्यक्रममा जानबाट उनले शिक्षामन्त्रीलाई रोकेको बताइन्छ । भाषा ज्ञानको अभावमा चीन सरकारले उपलब्ध गराउँदै आएको निःशुल्क छात्रवृत्ति कोटा गुम्दै गरेको र अध्ययन अवधि पनि लम्बिने गरेको अवस्था छ । यस्ता शिक्षकको नेपालमै भाषा अध्ययन गराउँदा नेपाली विद्यार्थी र अभिभावकले प्रत्यक्ष फाइदा लिँदै आएका छन् । भदौमा रिटायर्ड हुने दाहालको यस्तो व्यवहारले चिनियाँ भाषा शिक्षक रुष्ट बनुन् वा नबनुन् भन्ने विषयभन्दा पनि यसले दुई छिमेकी मुलुकबीच भएको सम्झौतामा पार्ने नकारात्मक असरप्रति गम्भीर हुन आवश्यक देखिन्छ । अन्यथा यसले नेपालको ब्युरोक्रेसीप्रति नकारात्मक धारणा बन्न सक्ने खतरा पनि छ । विदेशीले दिने ऋणमा पनि आउँदो आर्थिक वर्षका लागि करिब दुई खर्ब राखिएको छ । बाह्य ऋण लिने सम्झौता भए पनि तत्कालै रकम हात लाग्ला भन्ने छैन । सरकारले आफ्नो बजेटबाट आयोजनामा खर्च गर्ने र त्यसपछि विदेशी दातासँग शोधभर्ना माग्ने चलन छ । गाडीघोडा किनेर खर्च देखाएजस्तो, गोष्ठी, सेमिनारजस्ता कार्यक्रममा साधारण खर्च गरी बिल भर्पाई बनाएजस्तो नभएर ऋण भुक्तानी गर्ने बेला काम भएको स्थलगत निरीक्षण, मूल्यांकनपछि मात्रै रकम पाइने हो । यी र यस्तै कारणले प्रत्येक आर्थिक वर्ष बजेटमा उल्लेख भएको रकमको ४०-५० प्रतिशत खर्चै नभएको अवस्था छ । ऋणको सीमा वृद्धि हुनु राम्रो सूचक होइन । स्रोतका दृष्टिले अहिले आएको बजेट एकदम कमजोर छ ।

## विश्वको सेरोफेरो



राजेन्द्र स्थापित

# मायाँ न हो, जो सबैभन्दा माथि हुन्छ

डेभिड एल जर्ज सन् १९१६ मा ब्रिटेनको प्रधानमन्त्री बने । त्यसबखत प्रथम विश्वयुद्ध चरम उत्कर्षमा पुगेको थियो । प्रधानमन्त्री बनेपछि आफ्नी छोरीलाई घरमै आएर पढाउने शिक्षिका फ्रान्सिस स्टिवेन्सनलाई स्वकीय सचिव बनाए । त्यसबेलासम्ममा उनीहरूबीच अगाढ प्रेम बसिसकेको थियो जबकि जर्ज बिबाहित मात्र होइन २ छोरा र ३ छोरीको पिता बनिसकेका थिए । साथै दुबैबीच २६ वर्षको अन्तर थियो । उमेरमा ठूलो अन्तरको बाबजुद दुवै कसरी एकार्काको नजिक पुगे भन्ने बयान गतांकमा भइसकेको छ ।

जर्ज प्रधानमन्त्री र फ्रान्सिस स्वकीय सचिव भइसकेपछि हार्दिकता र आत्मीयता झन् बढ्यो । फ्रान्सिसको निम्ति जर्ज प्रतिष्ठाको विषय बने भने जर्जका लागि फ्रान्सिस बहुमूल्य र असल साथी । बिस्तारै खुलेरै आफ्नो स्नेह, माया-प्रेम न्यौछावर गर्न थाले । सन् १९२२ मा जर्ज जेनेभा गए । त्यहाँ उनलाई फ्रान्सिसको अभाव खट्क्यो । फ्रान्सिसको नाउँमा लामै पत्र लेखे । सामिप्यको चाहना जागेको भावना पोखे । 'तिम्रो पत्र पढ्न पाइएको दिन आनन्द लाग्छ' भनी लेखे । उनलाई देशको चिन्ताले सताएको त हुन्थ्यो नै परिवारले दिने दबाबले थप चिन्तित बनाउँथ्यो । पत्नी मार्गरेट र छोरी मेगान उनको र फ्रान्सिसको सम्बन्धबारे पूर्न जानकार थिए, मेगानले त गुरुआमालाई घृणा नै गर्न थालिसकेकी थिइन् । एकपटक मार्गरेटले पतिलाई पत्रै लेखेर फ्रान्सिसलाई स्वकीय सचिवबाट हटाउन भनिन् । पत्र पढेर जर्ज क्रोधित बने र 'सम्बन्ध बिच्छेद चाहिएको भए भन दिन्छु' भन्ने जवाफ पठाइदिए । लोग्नेको ठाडो पत्र पढेर मार्गरेट डराइन् र क्षमा मागिन् । जर्जले लोग्ने स्वास्नीबीच आदानप्रदान भएको सम्पूर्ण पत्र फ्रान्सिसका सामु राखिदिए । यो घटनापछि उनीहरूको सम्बन्ध झन घनिष्ठ बन्न पुग्यो ।

सन् १९२२ मा जर्जले प्रधानमन्त्री पदबाट राजीनामा दिए । उनी फ्रान्सिसलाई निजामती कर्मचारीतर्फ प्रथम श्रेणीको अधिकृत बनाएपछि मात्र पदबाट हट्न चाहन्थे तर फ्रान्सिसले त्यसो हुन मानिनन् । लिबरल पार्टी नेताको हैसियत जर्जले पत्रपत्रिकामा लेख र संस्मरण लेख्न थाले । यी कार्यलगायत जर्जकोमा भेट्न आउने अतिथिको सत्कार, पत्र ब्यवहार, खेतिपाति, स्वास्थ्यको हेरचाह सबैमा फ्रान्सिस एक्लैले सघाउँदै गइन् । यसबीच फ्रान्सिस पटक पटक गर्भवती बनिन् तर सन् १९२८ मा भने गर्भपतन गर्न मानिनन् । जर्ज फ्रान्सिसबाट बच्चा चाहँदैनथे, आफ्नो राजनीतिलाई धमिलो पार्न चाहँदैन्थे तर फ्रान्सिसले बच्चा जन्माउन हठ गरिन् । बाउ नचिनाउने शर्तमा बच्चा जन्माइन् । छोरी जेनिफरले बाउ मरेको २७ वर्ष पछि बल्ल सन् १९७२ मा मात्र जर्ज आफ्नै बाउ भएको थाहा पाएकी थिइन् । जर्जले आफ्नै छोरीलाई धर्मपुत्रीको रुपमा पाल्न थालेको नाटक गरेका थिए । र, आफ्नै घरमा हुर्काएका थिए, पत्नी मार्गरेटकै छत्रछायाँमा । त्यसो त जर्जसितको प्रेममा डुबिराखेकै बेला फ्रान्सिस लिबरल पार्टीका कार्यकर्ता तथा युद्धनायक कर्नेल थोमस ट्वीडसित पनि नजिकिए तर जर्जले उनीमाथि कुनै शंका गरेनन् र छोरी आफ्नै भएको बिश्वास फ्रान्सिसलाई दिलाए । यद्यपि इतिहासकारहरू जेनिफरको अनुहार जर्जसित भन्दा थोमससित मिलेको दावी गर्छन् । जेनिफर जन्मिँदा जर्जको उमेर ६६ पुगिसकेको थियो ।

सन् १९३१ मा जर्जको पौरष ग्रन्थीमा समस्या देखापऱ्यो । अपरेशनको खबर सुनेर मार्गरेट र मेगान दौडँदै घर पुगे । उनीहरू आइसकेपछि फ्रान्सिस मन नमानीनमानी वेस्टमिनिस्टरस्थित फ्ल्याटमा फर्कनु पऱ्यो । मार्गरेट र मेगानको उपस्थिति जर्जलाई पनि मन परेको थिएन त्यसैले डाक्टरसित सल्लाह गरी आफ्नो गाउँ चुर्त गए । फ्रान्सिसलाई पनि त्यहीं बोलाए । उनले घर नजिकै अर्को एउटा घर बनाउने सोच बनाए, ताकि मार्गरेटहरू आउँदा पनि फ्रान्सिससित टाढिन नपरोस् । छिट्टै जग्गा किनेर घर बनाए अनि उक्त घरमा फ्रान्सिसलाई बस्न दिए । यसबीच श्रीलंका जानुपर्ने भयो । सँगै जान मार्गरेट र मेगानले पनि ढिपी कसेपछि फ्रान्सिसलाई लान सकेनन् । यात्रा अवधीभर फ्रान्सिसको अभाव महसुस गर्दै बसे । नभन्दै भ्रमण छोट्याएर चुर्त पुगे जहाँ फ्रान्सिसले न्यानो स्वागत गरिन् ।

सन् १९३१ मै भारतका महात्मा गान्धी गोलमेच सम्मेलनमा भाग लिन लण्डन पुगे । जर्जले उनलाई चुर्त लगे । वार्तालापमा गान्धीले धेरै बोले, जर्जले सवालमाथि सवाल सोधिरहे । यसैबीच बैज्ञानिक अल्बर्ट आइन्स्टाइन पनि लण्डन पुगे । जर्मनीमा नाजीहरूले धेरै सताएर त्यहाँ बस्न नसकेपछि भागेर त्यहाँ पुगेका थिए । फ्रान्सिसले गान्धी र आइन्स्टाइनको सम्पूर्ण आतिथ्य सफलतापूर्वक निभाइन् । सन् १९३५ मा जर्ज र फ्रान्सिस घुम्न मोरक्कोको शहर तान्जियर पुगे । घुम्दै रमाउँदै निकै दिन बिताए । यसबीच सन् १९३९ मा मार्गरेट घरैमा लडिन् । कम्मरको हड्डी भाँचिएकोले ओछ्यान समाउन पुगिन् । लामो कष्ट भोग्दै सन् १९४१ को जनवरी २० मा निधन भयो । अन्तिम समयमा उनले लोग्नेलाई बोलाएकी थिइन् । तर, जर्ज लामो ट्राफिक जाममा फसे । घर पुग्दा मार्गरेटको मृत्यु भइसकेको थियो । सन् १९४३ मा जर्ज ८० वर्षको भए भने फ्रान्सिस ५५ की । दुवैजना सुटुक्क गिलफोर्डको रजिस्ट्रार कार्यालयमा पुगेर बिहे गरे । बिहे गर्न गइरहेको जानकारी कसैलाई दिइएको थिएन । त्यहाँबाट सिधै फार्म पुगे र फ्रान्सिसलाई देखाउँदै त्यहाँको मेनेजरलाई परिचय दिए- यिनी हुन्, श्रीमती जर्ज । पहिलो पटक 'श्रीमती जर्ज' शब्द सुनेर फ्रान्सिस निकै भावुक बनिन् । किनभने ३० वर्ष लामो समय उनले प्रेमिका मात्र बनेर भूमिका निभाउँदै आएकी थिइन् ।

बिहेको १८ महिनापछि जर्जलाई क्यान्सर रोग लाग्यो । दिनानुदिन कमजोर र दुब्लाउँदै गए । उनले फ्रान्सिसलाई पुर्ख्यौली घर लिएर गए । त्यहाँ उनीहरूको भव्य सम्मान गरियो । उक्त समारोहमा दिएको भाषण नै अन्तिम भाषण बन्यो । त्यहाँबाट फर्कँदै गर्दा आमा बिरामी भएको र उनको प्रतिक्षामा रोइरहेको खबर फ्रान्सिसले पाइन् तर उनी बिरामी लोग्नेलाई एक्लै छाडेर जाने स्थितिमा थिइनन् । केही दिनपश्चात आमाको निधन भएको खबर प्राप्त गरिन् । अन्तिम संस्कारमा पनि जान सकिनन् । आमाबुबाबाट छुट्टिएको ३४ वर्ष भइसकेको थियो । उनले पहिलो पटक बुबालाई पत्र लेखेर भनिन्, 'मेरो लोग्नेलाई गम्भीर रोग लागेको छ । तर उनी अति शान्त छन्, चिन्तामुक्त छन् । यतिखेर झ्यालबाट बाहिर चियाइ बसेका छन्, ब्यक्तित्व अझै आकर्षक देखिन्छ । घामको किरणमा उनको ब्यक्तित्व झनै गर्बिलो देखिन्छ । उनलाई रोग लागेकोमा कुनै दुःख छैन ।'

सन् १९४५ मार्च २६ को साँझ, फ्रान्सिस पलङ्गमा बिरामी लोग्नेसंगै टाँसिए बसेकी थिइन् । जर्जले उनैको काखमा देह त्याग गरे । ब्रिटेनको सरकारले राष्ट्रिय शोकको घोषणा गऱ्यो । जर्जको इच्छामुताबिक अन्त्येष्टि साधारण तवरबाट सम्पन्न गरियो । आफ्नो चिहान कता बनाउने पहिल्यै फ्रान्सिसलाई भनेका थिए । त्यहाँ एउटा ठूलो ढुंगा थियो, जुन ढुंगामा घुम्न त्यहाँ पुग्दा उनी बस्ने गर्थे । लोग्नेको इच्छाअनुसार पछि फ्रान्सिसले जर्जको चिहानमाथि उक्त ढुंगा राखिदिइन् । फ्रान्सिसको निधन जर्जको मृत्युको २७ वर्षपछि सन् १९७२ मा भयो । त्यसबेला उनी ८४ वर्षकी थिइन् । उनको मृत्युपश्चात मात्र जेनिफरले आमाबुबाको वास्तविकता थाहा पाइन् । उनले त आफूलाई पालेर हुर्काउने मार्गरेटलाई नै आफ्नी आमा ठानेकी थिइन् । जर्ज 'कन्या' राशीका थिए । प्रधानमन्त्री बन्नुअगाडि धेरै महिलासित सम्बन्ध थियो । आफ्नै पार्टीका सांसदसँग पनि अन्तरंग सम्बन्ध राख्थे । बेलायती इतिहासकार डान स्नो भन्छन्, 'जर्ज दिनमा ३ जनासँग सम्बन्ध गाँस्न सक्थे ।'

## करणीको कानुन, नगर्नेले पनि जानुन् !

नेपालको कानुन दैव नै जानुन् भन्ने कहावत त्यसै चलेको होइन, अहिलेनै चोरलाईभन्दा उसले बेचेको सामग्री किन्नेलाई बढी सजायँ हुने अवस्था देखिन्छ । चोरले सामग्री मैले चोरेर बेचेको भन्दैन र कतिपय अवस्थामा चोरेको सामान पत्ता लगाउन पनि सकिँदैन । त्यस्तो अवस्थामा साह्रोगाह्रो टार्न सहयोग गरौं भन्दै चोरेको सामग्री किन्ने दयालु पनि महाचोर सावित हुने अवस्था छ । जबर्जस्ती करणीमा त झनै बेहाल छ । कसैले मलाई जबर्जस्ती गऱ्यो भनेर उजुरी दिएकै भरमा जो कोहीले पनि जेल बस्नुपर्ने हुनसक्छ । यस्ता अमिल्दा कानुनी व्यवस्थामा संशोधन गर्न आवश्यक भैसकेको छ । अचेल त कुनै युवतीसँग फोनमा अचानक संवाद भएको अवस्थामा नियत बिग्रेको रहेछ भने मलाई फलानोले होटलमा बसौं भन्यो भनेर आशय करणीमा उजुरी दिनासाथ पक्राउ गर्नुपर्ने अवस्था छ । यस्तो उजुरीमा छानबिन गरी गिरफ्तार गर्नुभन्दा पहिले पक्राउ गरी छानबिन गर्ने चलन छ । त्यसैले न्याय दिने नाममा अन्यायसँगत देखिएका यस्ता कानुनी व्यवस्था र कमजोरीका प्रावधानलाई संशोधन गर्न छलफल शुरु भएको छ । तथ्य र प्रमाण नभए पनि कसैका सनक वा उक्साएको भरमै गरिने उजुरी तथा निवेदनले समाजका प्रतिष्ठित वा लब्धप्रतिष्ठित, सर्वसाधारण जो-कोही पक्राउ पर्ने गरेका छन् ।

अरु त अरु यस्तै कमजोर कानुनी व्यवस्थाका कारण सयौं प्रभावशाली नेता, प्रशासक, गुप्तचर, सेना र प्रहरीका हाकिमहरू शिकार भइरहेको अनुमान छ । यस्ता प्रभावशाली व्यक्तित्वलाई ब्ल्याकमेल गर्न सुन्दरीको पासो फ्याँकिएको अनुमान पनि लगाउन थालिएको छ । त्यसैले गत साता यसै विषयमा केन्द्रित रहेर राजधानीको हायात होटलमा एक छलफल शुरु भएको छ । सो कार्यक्रममा बलात्कारको आरोप र प्रकरणमा समाजसँग नमिल्ने र एकपक्षीय देखिने कानुन संशोधन गर्नुपर्ने माग गरिएको छ ।

## सेनापतिमा बाजी मार्लान् त सिग्देलले ?

अनेकन गलफत्ती र तनावबीच नेपाली सेनाको भावी कमाण्डरमा ३ तारे अशोक सिग्देललाई सिफारिस गर्न लागिएको बुझिएको छ । उनीविरुद्ध नागरिकता तथा शैक्षिक प्रमाणपत्रको फरक जन्ममिति प्रकरणमा एक वर्षअघि नै छानबिन भएको थियो । अघिल्लो रक्षामन्त्री पूर्णबहादुर खड्काको पालामा करिब एक महिना लगाएर गरिएको छानबिनमा कैफियत नभेटिएपछि बढुवा गरिएको थियो । त्यसबेला उठेको यो विवादको निरूपण अहिलेका प्रधानसेनापति प्रभुराम शर्मा र निर्मल थापाले गरेका थिए । यसै विषयलाई उठान गर्दा नयाँ डकुमेन्ट र प्रमाण नदेखिएका कारण पनि जर्नेल सिग्देलको नाम सिफारिस गरी पठाउने तयारी भएको दाबी स्रोतको छ ।

त्यसो त सिग्देलको उमेर प्रकरण छत्रमान गुरुङकै पालामा छताछुल्ल भएको हो । तर, पूर्णचन्द्र थापा प्रधानसेनापति भएका बखत बल्ल समाचार बनेका थिए । त्यसबेला अनन्त कार्की र प्रेम शाहीले आफू चिफ बन्न बाटो खुलाउने क्रममा यो विषयलाई उछालेको आरोप लागेको थियो । पछि यी दुवैले आफ्नो लक्ष्य पूरा गर्न सकेनन् । प्रेम शाहीमाथि कोर्टमार्शल भयो भने अनन्त दुई तारेबाटै रिटायर्ड भए । ताराध्वज पाण्डे र अशोक सिग्देलको प्रकरण करिब करिब एउटै जस्तो देखिन्छ । मुखैमा आएको प्रधानसेनापतिको पद छोडेर पाण्डे अष्ट्रेलियातिर लागेका छन् भने सिग्देल नयाँ जिम्मेवारी लिने सुरसारमा छन् । यी दुबै एउटै ब्याचका विद्यार्थी हुन् । दुवैको स्कूलमा भएको जन्ममिति दर्ता र नागरिकतामा लेखिएको विवरण फरक फरक पाइएको थियो । तर, सिग्देलको प्रकरणमा भने सुपिङ स्कूलका तत्कालीन प्रिन्सिपल कमलसिंह राठौरले जो जससँग सम्बन्धित छ भन्ने पत्र लेखेर फरक जन्ममितिलाई मान्यता दिएका थिए । त्यसैलाई आधार बनाएर सिग्देलले पहिला लिएको नागरिकता हरायो भन्दै पुनः जाजरकोट जिल्ला प्रशासन कार्यालयबाट प्रतिलिपि लिए । नियमसंगत हेर्ने हो भने जुन जिल्लाबाट नागरिकता बनाइएको हो त्यसै जिल्लाबाट प्रतिलिपि लिनुपर्ने थियो तर त्यसो नगर्दा बदनियत भएको देखिन्छ । एक समय पाण्डे र सिग्देल दुवै निकै मदिराप्रेमी भनी चर्चित थिए । अहिले सिग्देलले कडा रक्सी पिउन छाडेका छन् ।

ताराध्वज पाण्डेले जन्ममिति विवादकै कारण जागिर हापेर हिँडेको दाबी गरिए पनि भित्री कुरा भने बेग्लै रहेको स्रोतको दाबी छ । २६ जनवरीमा मनाइने गणतन्त्र दिवशको दिन लाजिम्पाटस्थित भारतीय दूतावासमा आयोजित कार्यक्रममा जाँडको तालमा मनपरी बोलेपछि उनीविरुद्ध भारतीय कूटनीतिज्ञहरू लागेको बताइन्छ । यो घटनापछि पनि पाण्डेले सोल्टी होटलमा आयोजित एक कार्यक्रममा भारतीय दूतावासका कर्णेल अमित शर्मालाई 'यु ब्लडी इन्डियन' समेत भन्न भ्याएका थिए । यस्तो व्यवहार गर्ने नेपाल आर्मीको चिफ भए हामीलाई मान्य नहुने भन्दै भारतीय राजदूतले विरोध जनाउँदा उनी रोलक्रमबाट वञ्चित भएको स्रोतको दाबी छ । एकताका नेपाली सेनाले बन्द रहेको हेटौंडा कपडा उद्योग सञ्चालनमा ल्याउने र त्यसको प्रमुख बनाएर इञ्जिनियर जर्नेल भोला बुढाथोकीलाई पठाउने योजना थियो । तर सेनाले कपडा उद्योग सञ्चालन गर्न नहुने भन्दै विवाद बढेपछि उनी जाने कुरा बीचैमा रोकिएको छ । तैपनि भक्तपुर खरिपाटीस्थित सैनिक इञ्जिनियरिङ कलेजको प्रमुखमा पदस्थापन हुने दाउमा छन् भनिन्छ । उनी पनि २५ बेसिकका हुन् । उपलब्ध प्रमाणका आधारमा २०२३ सालमा जन्मेको व्यक्तिले कसरी सेनाको २५ बेसिकमा जागिर पाउन सक्छ भन्ने प्रश्न पनि उठाइएको छ । तर, यस प्रकरणमा उनको प्रमाणपत्र सच्याउने र मान्यता दिने त्रिभुवन विश्वविद्यालयलगायत तालुकदार अड्डासमेत दोषी देखिन्छन् । सो बेसिकका जर्नेल निर्मल थापाबाहेक अरू सबै रिटायर्ड भइसकेका छन् ।

### • कसैलाई भने घरघरमै पद

आफन्त न्यायाधीशको सहयोगमा जिल्ला अदालतबाट २ वर्ष उमेर सच्याएर दुईतारे जर्नेल हुन सफल रत्नप्रकाश थापाले रिटायर्ड भएपछि पनि कानुनी सल्लाहकारमा नियुक्ति पाएका छन् ।

उनको सहायकमा रिटायर्ड कर्णेल अमित प्याकुरेल नियुक्त भएका छन् । दुईतारे जर्नेलको दरबन्दी कानुन विभागमा छ । उनी मातहत १०० जनाभन्दा बढी कानुन अधिकृत छन् । यसका बाबजुद किन चाहियो कानुनी सल्लाहकार ? एकपटक पनि अदालतमा बहस नगरेका थापा जर्सा'ब र एलएलएममा ब्याकपेपर लागेका कर्णेल प्याकुरेलको सल्लाह कस्तो होला ?

अदालतका न्यायाधीशहरूलाई नेपाली सेनाको हेलिकप्टरमा नाम्चे, रारा, मुगु, अन्नपूर्ण बेसक्याम्प, मुक्तिनाथ, सौराह, पाथीभरा घुमाएर ल्याउने कार्यमा खटिएका गाइड कर्सा'ब अमित प्याकुरेललाई सेनाले १० लाख रकम दिएर कानुनमा एलएलएम गर्न पठाएको हो तर सबै विषयमा ब्याक लगाएर पढ्न छाडे । शैक्षिक प्रमाणपत्रमा सीधै किर्ते गरेको देखिँदा पनि अशोक सिग्देललाई प्रभुराम चिफसाब, मानबहादुर महरा जर्सा'ब, सैनिक सचिव ज्योतिन्द्र महत, चिफसाबको एमए विष्णु खड्का जर्सा'ब, रत्नप्रकाश र अमितले चिफ बनाउने तानाबाना बुन्दैछन् । सर्वोच्च अदालतमा एनसेल भ्रष्टाचार आरोपको मुद्दा खेपिरहेका मधुकर कार्कीलाई २ तारे बनाउन गलत कानुनी सल्लाह दिनमा यही टोली कम्मर कसेर लागेको छ ।

## पाठक-पत्र

### मुद्दाका जर्नेल कसरी पुग्छन् माथि ?

साइकल जर्नेलको नामले परिचित र हालै दुईतारेमा बढुवा सिफारिस भएका मधुकर कार्की ३३ वर्षको जागिर अवधिमा २ वर्ष पनि काठमाडौं उपत्यकाबाट बाहिर गएनन् । नीतिविपरीत ११ वर्ष प्रमुख सेनानी भई गौरवसमशेर र राजेन्द्र क्षत्री चिफहरूको कृपाले तर मारे । सैनिक जीवनको १८ वर्ष विदेश तालिम र अमेरिकामा बिताए ।

| | | | | | |
|---|---|---|---|---|---|
| 079-WO-0518 | २०७९।०७।२९ | उत्प्रेषण | मधुकर सिंह कार्की | नेपाली सेना जंगी अड्डा भद्रकाली काठमाडौं, प्रधान सेनापतिको कार्यालय जंगी अड्डा भद्रकाली काठमाडौं / सैनिक सचिव विभाग जंगी अड्डा भद्रकाली काठमाडौं | हेर्न नभ्याइने ।। |

एनसेल काण्डमा संलग्न भएको मुद्दा सर्वोच्च अदालतमा विचाराधीन छ र यसको फैसला यही श्रावण मसान्तमा हुँदै छ । मुख्यसचिव त मुद्दा परेपछि निलम्बन भए तर मधुकर कार्की उल्टै कसरी पदोन्नतिको लागि सिफारिस भए ? रक्षा सचिव किरण शर्माको पिआरले जागिर ठेगानमा छैन । प्रधानसेनापति र नेपाली सेनालाई नै मुद्दा हाल्ने मधुकर कार्की कसरी बढुवामा परे ? सरकारले ढिला नगरी सेनाको भ्रष्टाचार छानबिन गर्नुपर्छ । जर्नेल-कर्णेल र चिफहरूले अमेरिका र अष्ट्रेलियामा कसरी आफन्तको नाममा घर सम्पत्ति खरिद गरेका छन् ? नेपालमा कसरी स्विमिङ पुलवाला घर महल बनाए ? अर्बौंको जग्गा-जमिन र घर कसरी कमाए ? राजेन्द्र क्षेत्रीको मात्र सम्पत्ति छानबिन गर्ने हो भने कल्पना नै गर्न नसकिने भ्रष्टाचारको फेहरिस्त उदांगिनेछ ।

### • प्रधानमन्त्री प्रचण्डलाई प्रेमपत्र

देश बिरामी छ, कहिले कोमामा पुग्छ थाहा छैन
तपाईंलाई कस्तो छ ?
जनता ओखती किन्न नसकेर मरिरहेको खबर त हामीले दिनहुँ सुन्छौं
बालुवाटारमा सुनिन्छ कि सुनिँदैन ?
पढाइ, लेखाइ तपाईंका आफन्तसम्मका सबै बालबालिकाले राम्रै पाएका होलान् !
मेरो कापी छैन भनेर निधारमा नातिको बडी पेन्ट भएको छ कि छैन कुन्नि ?
हामीले दिनहुँ देखिरहेका छौं
कापी नभएर मोसो दली अपमानित बाबु अनि शरीरभरि निलडाम र चोटपटकले दुखेका कलिला भविष्य
बालुवाटारले चलाउने फेसबुकमा देखिएको छ कि छैन प्रधानमन्त्रीज्यू ?
तपाईंको कोही मलेसिया र साउदीमा छन् कि जनताका छोराछोरी मात्रै ?
तपाईंले उपलब्धि अलाप्दा शहीदको घर क्वाँ क्वाँ रोएको सुन्नुभएको छ ?
तपाईंले परिवर्तन र समाजवाद भनिरहेको बेला अस्पतालको ३ तलाबाट फाल हालेर मरेको बिरामी पशुपतिमा धुवाउँदा म आर्यघाट पुगेको थिएँ ।
त्यतिबेला खुमलटारबाट उपलब्धिका भिडियो क्लिप आउट भएका थिए।
नथुनी किसानले गोठमा झुण्डिएर मर्दा तपाईं क्रान्तिले जनता जनाधिकार सम्पन्न हुँदै गए भन्दै हुनुहुन्थ्यो !
तपाईंहरूको जय होस्
तर शिवपुरी खोश्रेर बेपत्तालाई शहीद बनाइदिने कोसिस गर्नुहोस्
अनि तपाईंले आफूलाई कार्ल मार्क्स भन्नुहोला
हाम्रो त खबर बेकार छ प्रधानमन्त्रीज्यू, बालुवाटारछेउ आएर आत्महत्या गर्ने जनताको अवस्था भैसकेको खबर पनि जाहेर गराउन चाहन्छु
रेमिटेन्सबाट जनताका छोराछोरीको पसिना चपाएर विदेशीको ऋणले लोकतन्त्रको ढ्यांग्रो बजाउँदै हरेक शीर्षकमा लिइने करले दलाललाई नवधनाढ्य बनाएर शहीदको सहादतलाई खिल्ली नउडाइयोस् !

*- लक्ष्मण चौलागाईं, विद्रोही, सिन्धुपाल्चोक*

# अब एक महिना पढेर के गर्ने विद्यार्थीले ?

**– प्रा.डा विद्यानाथ कोइराला, शिक्षाविद्**

*हालै सार्वजनिक भएको एसईई नतिजामा झण्डै ५२ प्रतिशत बढी विद्यार्थी अनुत्तीर्ण भए । यसमा विद्यार्थी, पाठ्यक्रम, पाठ्यसामग्री होइन शिक्षकको सबैभन्दा ठूलो दोष देख्छन्- विद्यानाथ कोइराला । तर्क गर्छन्, 'हँसियाले घाँस काटेन भने दोष उध्याउन, चलाउन नजान्नेकै हो, बनाउने मान्छेको के हात ?' विचारधाराले कम्युनिष्ट नभए पनि बोली र व्यवहारमा क्रान्तिकारी भनिएकाहरूलाई समेत माथ खुवाउने गर्छन् उनी । पाँच दशक बढी शिक्षा क्षेत्र सुधारकै विषयमा सार्वजनिक फोरममा कठोर विचारधारा राखेकै कारण उनलाई दाउरे, खुइले मात्र होइन कसैले माफियाको आरोप लगाउँछन्, कोही राजावादी भन्छन्, डलर पचाउनका लागि बोलिस् भनेर गाली गर्नेहरू पनि भेटिन्छन् तर यी गालीबाट किञ्चित विचलित छैनन् । यो मुलुकमा कसैले आमूल परिवर्तन गर्न सक्छ भने शिक्षकले मात्र सक्छ भन्ने धारणा राख्दै आएका उनी त्रिभुवन विश्वविद्यालयमा लामो समय प्राध्यापनपछि ०७२ सालदेखि अवकाशको जिन्दगी बिताइरहेका छन् ।* **– हरि गजुरेल**



*० नौ वर्षसम्म छोपिएको एसईईको कमजोर नतिजा अहिले उदांगो भयो भनिँदै छ, कुरा त्यस्तै हो ?*

- निरन्तर मूल्यांकन छ, लेटर ग्रेडिङ्ग छ, फेल हुँदैनन् भन्ने भाष्य शिक्षकले बुझे । शिक्षकले नै त्यसो भनेपछि विद्यार्थीले केलाई पढ्नुपर्ने हो ? पढेर के हुन्छ भन्ने नै भए । राजनीतिले यो शिक्षाले बेरोजगार उत्पादन हुन्छ भन्यो । त्यही कारण नपढे पनि चल्छ भन्ने जमाना आयो । शिक्षकले पढाउने शैली र विद्यार्थीले पढ्ने शैली पूरै बदलियो । शिक्षक किताबमा आधारित भएर पढाउँछ, विद्यार्थी किताबभन्दा बाहिर दौडिसक्यो । शिक्षक किताबै समात्छ, विद्यार्थीचाहिँ मोबाइल समात्ने भइसक्यो । पढाउने तरिका मिलेन । विद्यार्थी फेरियो, शिक्षक जस्ताको त्यस्तै भएपछि के लाग्छ ? जुन शिक्षकले पढाएन उसकैमा नतिजा बिग्रिएको हो । शिक्षक विद्यार्थीलाई दोष लगाएर उम्किएला तर मैले दोष लगाउने शिक्षकलाई हो किनकि हामीले पालेको तिनै शिक्षकलाई हो । गर्नुपर्ने, जान्नुपर्ने तिनैले हो । सम्मान पाउने उनैले, गाली पनि उनैले पाउने हो । शिक्षामन्त्री, पाठ्यक्रम, पाठ्यपुस्तकलाई दोषी भन्नु नचाहिने कुरा हो ।

*० गणितमा १ लाख ७७ हजार ९८५, विज्ञानमा १ लाख २६ हजार ९ सय ३३, अंग्रेजीमा १ लाख १३ हजार ३८३, नेपालीमा ७९ हजारले ३५ अंक कटाउन सकेनन् । यसमा परीक्षा प्रणाली, पाठ्यपुस्तकमा कमजोरी छैन भन्दै दोषजति शिक्षकको थाप्लोमा थुपार्नु कति उचित होला ?*

- पाठ्यक्रम, पाठ्यवस्तु मरेको चिज हो, जिउँदो त शिक्षकहरू हुन् । नेपालको संस्कृति, भूगोल, भाषा फरक छ, देशैभर एउटै पाठ्यक्रम, पाठ्यपुस्तक लागू गर्न कठिनाई छ । सबै चिजबिज जान्ने त त्यही शिक्षकले हो । शिक्षकहरूलाई म बारम्बार एउटै प्रश्न गर्छु, तपाईंहरू बुद्धिजीवी कि बुद्धुजीवी ! बुद्धिजीवी हो भने बुद्धि उपयोग गर्नुहोस्, बुद्धुजीवी हो भने निहुँ खोज्नुहोस् । नाम बुद्धिजीवी, काम बुद्धुजीवी नहोस् ।

*० उसो हो भने, माध्यमिक तहको शिक्षण सिकाइ चरम संकटमा छ भनेर बुझ्नुपर्‍यो, हैन त !*

- विषयगत शिक्षक छैनन् होला, त्यो मान्छु म । देशभरका ६ हजार माध्यमिक विद्यालयमध्ये ७१ वटामा मात्र विषयगत शिक्षक छन् । त्यो यथार्थ बुझेपछि शिक्षक छैन भनेर सुख पाइन्छ ? जहाँ शिक्षक छ, त्यसलाई परिचालन गरेर मोबाइल शिक्षक बनाउन सकिन्छ । पालिकाले त्यसलाई दिने, कति खर्च हुन्छ र ? व्यवस्थापन भएन, परिचालन गर्ने सिप भएन, शिक्षकलाई यसो गर्नुपर्छ भनिदिने मान्छे पनि भएन । नयाँ विद्यार्थी आएको छ भनेर शिक्षकले बुझेको छ तर कसरी पढाउने न पालिका, न प्रदेश न संघ सरकारले नै भनिदिन्छ । उनीहरू त लावारिस हुन्, लावारिसले जे जान्छन्, त्यही गर्ने हो । अर्कोतिर विद्यार्थी बदलिँदा हाम्रो नियति बदलिन सकेन । पाँच दशक अगाडिको जस्तो विद्यार्थी थियो । टुप्पी बाँधेर पढ्ने, नपढे मेरो जिन्दगी बर्बाद हुन्छ भन्ने केटाकेटी र नपढे पनि चल्छ, केका लागि पढ्ने हो भन्ने केटाकेटीलाई एउटै ढंगले पढाउन मिल्छ ? हिजो छानिएका मान्छे आउँथे, आज भएभरका आउँछन् । छानिएका मान्छे र भएभरका जति सबैलाई पढाउने तरिका एउटै हुन्छ ?

*० विनोद चौधरी, अशोक राई, गिरिराजमणि पोखरेल, उमेश श्रेष्ठहरू नै महँगो बोर्डिङ चलाउने, आफैं विधायक, आफूअनुकूल ऐन कानुन बनाउने कुराले कति बाधा पुगेको छ शिक्षा क्षेत्रमा ?*

- निजी र सार्वजनिकको तुलना नै हुँदैन । प्राइभेट पैसाका लागि कुद्छ । फेल भएको खण्डमा बर्बाद होला भनेर त्यही कारण लगाम, समर्पण छ । प्राइभेटको व्यवस्थापनले शिक्षकलाई उजिल्याउनका लागि कि डण्डा लगाउँछ वा समय समयमा कोचिङ्ग, तालिम गर्छ । सरकारी स्कूलले जिरी नगरपालिकामा प्रति महिना पाँच हजार खर्च गर्छ । प्यूठान नगरपालिकाले प्रति विद्यार्थी प्रतिमहिना २७ सय ३० रूपैयाँ खर्च गर्छ । निजीले कति लिन्छ ? लाज हुन्न ? अझै हामी निजीले धेरै शुल्क लियो भन्दैछौं । पार्टीले बोलाउँदा कार्यक्रममा जान मिल्ने, विद्यार्थी एसईईमा पास भए भनेर छुट्टी लिन मिल्ने, अनि सरकारी शिक्षकले निजीले कसरी पढाउँछन् भनेर हेर्न नमिल्ने ? सिमराको जितपुर नगरपालिकाले एउटा सर्भे गर्दा ७१ प्रतिशत शिक्षकको निजीमा लगानी भेटियो । ६९ प्रतिशत जनप्रतिनिधिको निजीमा लगानी छ । अब कसलाई भन्न जाने ? निजीका लागि दौड हो, सरकारीका लागि जागिर । निजीले नेता पालेका छन् । कुन राजनीतिक दलका नेताले बोल्न सक्छन् कि मैले स्कूल सञ्चालकहरूबाट पैसा खाएको छैन भनेर ? नुनको सोझो गर्ने नै भए, गरेकै छन् । शिवराज नगरपालिकामा राप्रपाको मेयरले निःशुल्क गरायो शिक्षा तर कमरेडहरूले स्कूलमा लगानी गरेर पैसा उठाइरहेका छन् । गिरिराजमणि पोखरेलको स्कूल गौरीडाँडा । त्यहाँ शुरुदेखि नै शुल्क लिइरहेका छन् । विप्लवनजिकको बुटवलको कालिका स्कूलले जमानादेखि शुल्क लिइरहेको छ ।

*० हालै एसईईको नतिजापछि अनुत्तीर्ण दुई जना विद्यार्थीले आत्महत्या गरेको विषयलाई कसरी हेर्नुहुन्छ ?*

- हाम्रा केटाकेटीहरू बढ्ता संवेगी भए । विकल्प दिन सकिएन । तिमी फेल भयौं, पढिखान्नौ तर गरिखान सक्छौ । गरिखाने बाटो यो हो भन्न सकिन्छ । नेटबाटै सबै कुरा सिक्न सकिन्छ तर तिनलाई त्यतातिर जोड्न सकेनौं । उत्पादन बिकेन भन्ने भाष्य निर्माण गर्‍यौं तर गुल्मीको सत्यवती गाउँपालिका उत्पादन भएका कुरा किन्न तयार छ । गरिब केटाकेटी नै फेल भएका हुन् । उसले अंग्रेजी जानेन भनेर के चिन्ता ? नाच्न सक्छ, गाउन सक्छ वा दौडन सक्छ । तेरिया मगरलाई नाच्न, मेनुका पौडेललाई गाउन कसले सिकायो ? यस्तो समयमा त्यही पुराना कुरा दोहोर्‍याउन मिल्छ ?

*० शिक्षा मन्त्रालयकै आँकडा हेर्ने हो भने, कक्षा एकमा भर्ना भएका १२ लाखमध्ये ५ लाख मात्र एसईईमा सामेल भएका देखिन्छन् । झण्डै सात लाख विद्यार्थी मिसिङ छन् । यो केको लक्षण हो ?*

- अनिवार्य तथा निःशुल्क शिक्षा ऐन २०७५ अनुसार ८५ साल वैशाख १ गतेसम्म बीचमा ड्रप आउट भएका केटाकेटीले न्यूनतम ८ कक्षासम्मको आधारभूत शिक्षा पाउनै पर्छ । त्यो पाएनन् भने नागरिकता, जागिर, सेवा सुविधा पाइन्न । यसैमा टेकेर मैले पालिकाको मेयर/उपमेयरलाई तपाईंहरूलाई बाँधेर लैजाने दिन नजिकै आयो भनेको छु । किनभने आधारभूत शिक्षा नलिएको बच्चाले पछि नागरिकता नपाउला र मुद्दा हाल्ला । अदालतले हराइदिएपछि बाँधिएर जानुहोला, अहिलेदेखि शुभकामना भनेर हिँड्ने गरेको छु ।

*० एउटा सहसचिवसरहको माध्यमिक शिक्षकलाई गाउँपालिकामा अधिकृत छैटौंको मातहत राखिएको छ । मावि द्वितीय र प्रथम श्रेणीका शिक्षकको मूल्यांकन पनि उनैले गर्ने व्यवस्था छ । यो न्यायसंगत भयो त ?*

- दिनेश थपलिया सामान्य प्रशासन सचिव हुँदा उहाँलाई पालिका अधिकृतको ठाउँमा संयोजक भनिदिनुहोस् भनें । संयोजक भनिँदा जोडिँदो रहेछ, अधिकृत भनिँदा निहुँ खोजिँदो रहेछ । कर्मचारीतन्त्र भनेको हाइर्‍याङकिङमा भन्ने जात रहेछ । बिए पास कर्मचारीको अण्डरमा हामी एमए पास गरेको शिक्षक किन बस्ने भन्छन् ? त्यति हुँदाहुँदै पनि कतिपय ठाउँमा राम्रै काम गरिरहेका छन् । टोखा नगरपालिकाका उपसचिव बाबुरामले सेक्सन अफिसरको अण्डरमा खटेर काम गरिरहेका छन् । उनको प्रमोसनको बाटो पनि बन्द छ ।

**शिक्षक किताबै समात्छ, विद्यार्थीचाहिँ मोबाइल समात्ने भइसक्यो ।**

**•••**

**६ हजारमध्ये ७१ मा मात्र विषयगत शिक्षक छन् ।**

**•••**

**७१ प्रतिशत शिक्षकको निजीमा लगानी भेटियो । ६९ प्रतिशत जनप्रतिनिधिको निजीमा लगानी छ ।**

**•••**

**तेरिया मगरलाई नाच्न, मेनुका पौडेललाई गाउन कसले सिकायो ?**

*० देशैभर २८ सय प्लस टु पढाउने कलेज छन् । एसईईमा ५२ प्रतिशत विद्यार्थी अनुत्तीर्ण हुँदा ती कलेज आर्थिक रूपमा डामाडोल हुँदैनन् ?*

- लगानी धेरै, उत्पादन कम । जनसंख्या वृद्धिदर शून्य दशमलव ९२ प्रतिशत, यस हिसाबले पनि अब विद्यार्थी धेरै हुन्नन् । खाडीमा गएका विद्यार्थीलाई अनलाइनमा पढाउन सकिन्छ । कलेजमा फलानो उमेरका मात्र पढ्नुपर्छ भनेर कहीँ लेखेको छ ? व्यापारी, किसान, राजनीतिज्ञलाई पढाए के हुन्छ ? त्यसो हुँदा विद्यार्थी घट्छन् र ? यो बुद्धि कलेजहरूले गर्नुपर्छ । मालिकहरूले स्वीकृति दिनुपर्छ । नर्वे, फिनल्याण्डमा विद्यार्थी नभएपछि त्यही गरिरहेका छन् । स्वास्थ्यका लगानीकर्ता, शिक्षाका लगानीकर्ता नै नेता छन् । सबै छोरीहरूलाई स्यानिटरी प्याड, सबै केटाकेटीलाई किताब दिऊँ अब ।

*० वर्तमान शिक्षामन्त्रीको कामलाई कसरी हेर्नुहुन्छ ?*

- मुद्दा उठाउनमा माहिर हुनुहुन्छ तर उहाँको चिन्तनलाई व्यवहारिक गराउन गाह्रो भइरहेको छ । उहाँ धेरै ठाउँमा चिप्लनुभएको छ । जस्तो निःशुल्क शिक्षा भनिदिनुभयो । पैसा कसले तिर्छ ? भन्यो भने जवाफ छैन । कल्पनामात्र गरेर हुँदैन, यथार्थ बुझ्नुपर्छ, दरबन्दी छैन, शिक्षा महँगो परिरहेको छ, शिक्षक सार्न सकिँदैन । चार जना केटाकेटी पालेर बस्नुपरेको छ । ती शिक्षकलाई अर्को विद्यालयमा सार्न कसैले सक्दैन । चीनमा ३५० युआनसम्म शुल्क लिन पाइन्छ भन्छ । हाम्रै विराट नगरपालिकाले अभिभावकसँग पैसा लिएर चलाइरहेको छ । अनिवार्य शिक्षा भन्ने तर गर्ने कसले- पालिका, प्रदेश वा संघले ? ६० जना शिक्षकले दलबाट राजीनामा दिए भनेर दंग परेर हुन्छ । विधानमा परिवर्तन नभएसम्म कसैले पार्टीले छोड्दैन । शिक्षकले लेबी तिरेपछि स्वाभाविक हो आश्रय खोज्छन्, नपढाए पनि पार्टीले संरक्षण गर्छ । कांग्रेसको विधानमै ६ जना महासमिति सदस्य लान पाइन्छ भनिएको छ शिक्षकबाट । एमाले-माओवादीको पोलिट्ब्युरोमै छन, शिक्षकहरू । राजनीतिक दलले शिक्षकमा भातृ संगठन खोलेर अपराध गरेकै हुन् । अशोक राईलाई शिक्षक सेवा आयोगको अफिसमा तपाईंहरूले अपराध गर्नुभयो भनेको हो मैले । हिजो पञ्चायतका विरोधमा लगाउनुपर्ने भएका कारण गरेकै हो अब कोही विरोधमा छैनन्, विस्तारै साथीहरू मुक्त हुनुपर्छ भन्नुभयो । सुमना श्रेष्ठ कारवाहीमा गएर फस्नुभयो, जरै काटिदिनुपर्दथ्यो । सबै विद्यार्थीले एसईई दिन पाउने निर्णय गर्नुभयो तर यत्रो समय पढेको काम लागेन, एक महिना पढेर के गर्लान् विद्यार्थीले ? भर्ना एकाथरी साउनमा, अर्कोथरी असोज, कात्तिकमा हुने भयो । मुद्दा बैठानमा उहाँको बुद्धि अझै पुगेको छैन ।

*० त्यसलाई कसरी सल्टाउने त ?*

- अहिले क्रेडिट आवर छ । यसको विशेषता भनेको के विषय पढें भन्दा पनि पढेको क्रेडिटलाई जम्मा गर्ने, लचिलो कलेज र विश्वविद्यालय बनाउन जोड दिने हो । निजी विद्यालयलाई यतिभन्दा शुल्क लिन पाइँदैन भन्नुभन्दा दलसँगै संवाद गरेको भए हुन्थ्यो । निजी विद्यालय चलाउने दल नै हुन् । काँगेसले खोल्यो, एमालेले संस्थागत गर्‍यो, माओवादीले कमाएकै हो । लाज मान्नुपर्ने कुरै छैन । निजीलाई नियमन गर्ने वा स्वतन्त्र छोडिदिने ?पाँचतारे होटलमा गएर खाए नि खा, सडकमा गएर टपरीमा खाए नि खाए भनेर छोड्ने भए अर्कै कुरा होइन भने सुविधा के के ? त्यो सुविधाअनुसार यति हुनुपर्छ भनेर ठोकिदिनुपर्‍यो । निजी र सरकारीबीच सहकार्यको डिजाइन बनाउने आवश्यकता भइसक्यो । निजीले शहर खाइसक्यो । गाउँ गाउँ पुगिसक्यो । रमेश सिलवाललाई त मैले भनें पनि तपाईंहरू दुर्गममा जानुपर्ने भयो । प्रकाशशरण महत र वर्षमान पुनसँग पनि प्रस्ताव राखें । बैंकले खाता खोल्दिने, पालिका र अभिभावकले दैनिक एक रुपैयाँ बचत (बिसे नगर्जीको बुद्धि) लगाऔं न भनेको हुँ । व्यावसायिक विद्यालयमा विद्यार्थी घट्दो क्रममा छ, फेरि सिल्लीहरूको जमात छ, व्यावसायिक शिक्षा चाहिन्छ भनेर कसले कुरा उठाउने ?

*० तपाईंहरू हुँदाको विश्वविद्यालय र अहिलेको विश्वविद्यालयमा के फरक पाउनुहुन्छ ?*

- हाम्रो पालामा समर्पण भाव थियो, अहिले पद र पैसाका लागि दौडिएको देखिन्छ । कति जना भयो भने विश्वविद्यालय हुन्छ ? जतिखेर टर्बाइन आयो त्यो भन्दा अगाडि हामीले मदानी बनाएका हौं । मोही पार्ने मदानीको बारेमा कहिले पढ्ने, पढाउने ? कम्युनिष्टहरू मार्क्स, लेनिन भनेर मात्र दौडिन्थे । अहिले सद्बुद्धि पलाएको छ । शैव, कपिल दर्शन, बुद्ध दर्शन यी रैथाने दर्शन हुन यस्लाई पढाउनुपर्छ भनेर शिक्षा नीतिमा लेखिएको छ । मोहन वैद्यले हिमाली दर्शन लेख्नुभएको छ । देवेन्द्र पौडेल र हिमाल शर्माकै अगाडि जनवादी शिक्षा लागू गर्नुहोस् भन्दा उनीहरूले सकिँदैन भने । कांग्रेसका नेताहरूलाई समाजवादी शिक्षा लागू गरौं न भन्छु बोल्दैनन् । केपी ओलीलाई भनें- यसबीचका ६ जना शिक्षामन्त्रीमध्ये ५ जना कम्युनिष्टका थिए । के गर्नुभयो ? कसलाई कति मात्र गाली गर्नु ?

## फोटो





रुस र युक्रेन घनघोर लड्ने, मर्ने हाम्रा छोरा, विपिन जोशी गाजाबाट किन गायब हो र ! विदेशतिर लडाइँ हुने रमिताचाहिँ यहाँ, पक्ष लिँदै गाडी चल्ने चलन अन्त कहाँ !

## मेरो कथा, मेरो व्यथा



हरिजी
priyarasuwa@gmail.com

# पढे, लेखेकी केटीमाथि नै यस्तो अत्याचार

अभागी खप्पर जता पुग्यो उतै ठक्कर भन्छन्, उस्तै छ हाल । सपना थियो- जीवनमा नर्सिङ पढेर बिरामीको सेवा गर्ने तर अभागीका सबै रहर कहाँ पूरा हुँदा रहेछन् र ? ती सपना/योजना जन्मनै नपाई तुहिँदा रहेछन् । दूरदराज होइन, यही काठमाडौं खाल्डोमा अनि अशिक्षित होइन शिक्षित परिवारकै एक महिलाले भोगेको भुक्तमान हो यो । कालोकोटधारी एक वकिलकी पत्नी, पाँच वर्षदेखि घरभित्रै अन्याय भुक्तमान गरिरहेकी छन् । परिवारको बेइज्जत होला भनेर अत्याचार सहिरहेकी छन् । स्कूलमा 'लेडी विथ द ल्याम्प' फ्लोरेन्स नाइटिङ्गेलको जीवनी पढेपछि नै संकल्प गरेकी थिइन्- प्लस टु (हाल माध्यमिक तह) उत्तीर्णपश्चात् नर्स बन्ने । कसैलाई थाहा छैन ईश्वर कहाँ लुकेर बसेको छ तर त्यही ईश्वरले भन्छ रे, 'तँ चिता म पु-याउँछु ।' नभन्दै उत्कृष्ट अंकका साथ प्लस टु उत्तीर्ण गरेपछि कडा मिहिनेतसाथ अध्ययन गर्न थालिन् । सानैदेखि पढाइमा अब्बल । एकपटक पढेपछि दोहो-याउनै नपर्ने । पढाइबाट परिवार औधी खुशी । परिवारमा अन्य दिदीबहिनीभन्दा जिउडाल मिलेको । काठमाडौंमै घर भए पनि परिवार आर्थिक रुपमा मध्यम । घर भाडाबाहेक आम्दानीको स्रोत किराना पसल तर राम्रो नचलेको । प्लस टु उत्तीर्णपछि जसोतसो परिवारले नर्सिङ नै पढाए । दाजुभाइ र दिदीबहिनी सबैलाई दाँजोमा पढाउन सक्ने अवस्था थिएन । र, आर्थिक स्थिति सामान्य भएकै कारण बेलैमा विवाह गर्न बाध्य भइन् ।

काठमाडौंमै घर भएको र राम्रो खानदानको परिवारले मध्यम परिवारसँग सम्बन्ध गाँस्न पाउँदा को पो खुशी हुँदैन होला ! साँच्चिकै फिल्मी शैलीमा एक जना वकिलले बुवाआमासँग हात मागे । शर्मिलाको परिवारले एक बचनमै सहमति जनायो । जबकि अध्ययन पूरा हुन पाँच महिना मात्र बाँकी थियो । कोटेश्वरकी शर्मिला श्रेष्ठ (नाम परिवर्तन) को काठमाडौं कपनका स्थायीवासी सुमन श्रेष्ठ (नाम परिवर्तन) सँग २८ वैशाख ०७६ सालमा धुमधामका साथ मागी विवाह भयो । आफ्नो खुट्टामा नउभिउञ्जेलसम्म विवाह नगर्ने ढिपी गरे पनि केही जोर चलेन । 'खास्साको केटो छ । हुनेवाला वकिल ज्वाइँले विवाह गरेपछि तेरो सपना सबै पूरा गर्छु भनेका छन् । फेरि फेरि यस्तो ज्वाइँ पाउन मुश्किल छ ।' जसले जतिसुकै जे भने पनि आफ्नो तागतले बाँच्ने नभइञ्जेल विवाह नगर्ने अड्डीले कुनै काम गरेन । अन्ततः परिवारका लागि भए पनि विवाह नै गर्नुपर्ने भयो । पति सुमनले विवाह पछि केही माया देखाए । यसबीच जसोतसो नर्सिङ सकाइन् । मागीविवाह भएकाले सुमन र उनको घरपरिवारबारे धेरै थाहा थिएन । उनी विस्तारै परिवारसँग घुलमिल हुँदै थिइन् । आफ्नो भन्नु सुमन नै थियो ।

विवाहपछि नोकरी गर्ने, अझै धेरै पढ्ने इच्छा र चाहना थियो तर त्यो धोको अहिले चुल्हो र चौकोमा बितिरहेछ । बिहान ५ बजेदेखि बेलुका ११ बजेसम्म घरको काममा व्यस्त हुन्छिन् । शरीरमा सेतो कपडा, हातमा बिरामी जाँच्ने औजार अनि कलम समात्नुपर्ने बेला दैनिक झाडु चलाइरहेकी छिन् । घर परिवार र बूढाको खप्की खाइरहेकी छिन् । जे गरे नि जस छैन । दिनरात घरधन्दाको काम र सबै जनाको जुठो भाँडा मोल्नुपर्ने भएकाले हात पटपट फुटेको छ । जति राम्रोसँग काम गरे पनि सासूआमाको गाली गोलीबराबर छ । न बोल्दा निको न चुप लाग्दा नै । भालेको डाँकोसँगै सबेरै उठेर घर बढार्ने, सरसफाइ गर्ने । त्यसपछि चिया पकाएर टक्राउने अनि परिवारका लागि

**शरीरमा सेतो कपडा, हातमा बिरामी जाँच्ने औजार अनि कलम समात्नुपर्ने बेला दैनिक झाडु चलाइरहेकी छिन् ।**

खाना तयार गर्ने । वकिल पतिले पढाइदिएको भए वा सेवा गर्ने अवसर दिएको भए अहिले स्टाफ नर्सको रुपमा कतै सेवा गरिरहेकी हुन्थिन् होला । उनले जागिर खाँदा परिवारको पनि उत्तिकै शान बढ्थ्यो होला । उनी यस्तै कल्पिँदै बिहान खाजा र खाना खाएको सबै भाँडाकुडा मोल्दा १२ बजाउँछिन् । त्यसपछि दुई तीन घण्टा परिवारले थापेको पसलमा बस्यो । फेरि खाजा बनाउने समय भइहाल्छ । खाजा खुवाएपछि बेलुकीसम्म पसलमा बितायो । पसलबाट फर्केपछि घरपरिवार सबैलाई खाना तयार पार्ने र खाना खाए पछि सासू र श्रीमानको सेवा गर्नुपर्ने । त्यसपछि जुठो भाँडा माझ्दा ११ बजिसक्छ । त्यतिञ्जेल पति आराम गर्दै केही किताब पढेजस्ता देखिन्छन् । भाँडा माझीवरी बिछ्यौनामा पल्टिँदा पति आफूमाथि खप्टिन्छन् । विरोध गर्न सक्दिनन् । कठै ! जिन्दगी । के सोचेको, कहाँ पुगिन् । आफ्नो पुर्पुरोमा हात राख्नुसिवाय केही छैन ।

कतिपय यस्ता सासू पनि भेटिन्छन्, जसले बुहारीलाई छोरीसमान हैसियत दिएका छन् तर सबैको ललाटमा त्यस्ता सासू पाउन कहाँ लेखेको हुन्छ र ? दिनभर घरभित्रको कामले शरीर खेतमा जोतिएको बूढो गोरुझैँ झुल्न बाध्य हुन्छ । विश्रामको समय एकछिन टिभी खोल्यो भने, 'ऐ ! यति राति त्यो ठाँडो बन्द गर । सुत्नलाई डिस्टर्ब भो' भन्दै हप्की र दप्की गर्छिन् सासूआमा । बेलैमा खाना पाक्छ तर अरुलाई पेटभरी नखुवाई बुहारीले एक सिता मुखमा हाल्न नपाउने नियम त छँदै छ । अब, यसरी कतिञ्जेल चल्छ त जिन्दगी ? 'परिवारको खुशीका लागि जीवन कसैलाई सुम्पन बाध्य भयो न त छाडेर हिँड्न सक्ने । जाने पनि कहीं ठाउँ छैन । छाडेर हिँड्यो भने पनि नेपाली समाजको चलन यस्तै छ । एक मुठी आशका भरमा बाँचेकी छन् ।' अनामनगरमा सुमनको ल फर्म छ । आफूलाई पढाउन जति रोइकराई गरे पनि पढेर केही ननापिने जवाफ दिँदै चुप लागेर घरमै थच्चिन अह्राउँछन् । विवाहपूर्व सुख सयलमा राख्छु, अनि तिम्रा इच्छा मार्न दिनेछैन भन्ने पतिले नै यति धेरै माया ममता दिएपछि अरु कुरा छाडौं । शर्मिला कान्छी बुहारी । यसअघि नै जेठी र माहिली बुहारी सासूससुरासँग बस्न नसकेर छुट्टिइसकेका । 'आफू त कान्छी । जीवनै कान्छी भएर बित्ने भो । छाडेर हिँड्न सक्दिन । अर्को जुनीमा पुरुष भएर जन्मिन चाहन्छु' भन्छिन् ।

इमान्दार ढंगले जिम्मेवारी निर्वाह गर्दासमेत एकदिन चोरीको आरोप लाग्यो । नन्दले तल्लो बाकसमा राखेको सुनको सिक्री माथिल्लो बाकसमा राखेर मामाघर गइछन् । फर्केर आउँदा त्यहाँ सिक्री भेटिनन् र तँ चोर्नी भन्दै जगल्टा लुछिन् । सासू, ससुरा र श्रीमान् पनि नन्दतिरै लागे । त्यो रात उनी निदाइनन् । रातभरि आत्महत्या गर्ने योजना बनाइन् तर कसैगरी सकिनन् । एउटा कालोकोटधारी वकिलकै श्रीमतीले भोगेको भुक्तमान हो यो । उनको बेइज्जत नहोस् भनेरै सारा अन्याय र अत्याचार हलाहल बिषझैं पिएर जीवन गुजारिरहेकी छन्, शर्मिला । *- शर्मिलाको हितैषी गंगा पराजुली*

# अमेरिकामा वाणिज्यदूत र नेपाली पत्रकार अचाक्ली

नेपाल सरकारले विभिन्न देशमा वाणिज्य सम्बन्धलाई सबल र सुदृढ गर्न नियुक्त गर्ने अवैतनिक महावाणिज्यदूतको नियुक्तिमा भद्रगोल मच्चिएको छ । करिब दुई महिनाअघि अमेरिकाको बोस्टन राज्यका प्रल्हाद केसीलाई नियुक्त गरिएको छ । केसीविरुद्ध धर्मपत्नीलाई शारीरिक हिंसा गरेको अभियोग लाग्नुका साथै एनआरएन फुटाउने काममा सक्रिय रहेको आरोप छ । त्यसैगरी, गोर्खा घर भएका घननाथ दवाडीले पनि वाणिज्यदूत बन्न कसरत गरेको बताइन्छ । उनी राजनीतिक शरणार्थीको पहिचान बोकेर अमेरिकामा शरण लिएका व्यक्ति हुन् । त्यसैकारण उनको नियुक्तिबारे सहमति जुटिसकेको छैन । परराष्ट्रमन्त्री नारायणकाजी श्रेष्ठको सिफारिस भने उनको पक्षमा भएको बताइन्छ । दवाडी अमेरिकाको क्यालिफोर्नियावासी व्यवसायी ऋषि ढकालका साला हुन् । अमेरिकन अथोरिटी होमल्याण्ड सेक्युरिटीले उनको नाममा सहमति जनाइसकेको अवस्था छैन ।

राजनीतिक शरण लिएकाहरूलाई वाणिज्यदूत बनाउँदा कानुनी तथा नैतिक रूपमा गलत हुने दावी अन्य दूतले गरेको बताइन्छ । उनीमाथि माओवादी केन्द्रबाट गण्डकीको नेता हुँदा महिला कमरेडहरूलाई दुर्व्यवहार गरेको आरोपसमेत लगाइएको चर्चा छ । पर्यटन विभागले पर्यटन दूतका रूपमा पनि उनलाई नियुक्ती दिएको थियो । नेपालमा हुँदा कमलादीस्थित प्रज्ञा प्रतिष्ठानपछाडि रहेको गण्डकी दोहोरो साँझमा यौनजन्य हिंसाको आरोप लागेपछि लफडासमेत चल्यो । त्यसैबेला लायन्स क्लबको सहारामा अमेरिकामा राजनीतिक शरणार्थीको रूपमा शरण लिएका थिए ।

त्यसैगरी ओहायो राज्यमा डा. दामोदर पौडेल अवैतनिक महावाणिज्यदूत छन् । अमेरिकन राजनीतिककर्मीसँग घनिष्ठ र निकटसम्बन्ध भएका उनले कोरोनाकालमा राम्रो काम गरेको बताइन्छ । उनी अमेरिकनकै रोजाइ र सिफारिसमा वाणिज्यदूत भएको दाबी पनि गरिएको छ । नेपालस्थित लिङ्कन स्कूलको जग्गा लफडामा सहयोग गरेका थिए ।

अमेरिका जाने र बस्ने धेरैको चाहना हुन्छ, त्यसैबमोजिम उतै स्थायी बसोबास गर्ने नेपाली पत्रकारको संख्या पछिल्लो कालमा दुई दर्जन नाघेको छ । तरुण साप्ताहिकका तरुण पौडेलले सुशासन, विजय र सञ्जय घिमिरेले आर्थिक क्षेत्रमा काम गरेबापत एक्स्ट्राअर्डिनरी ग्रीनकार्ड लिएका छन् भने विष्णुहरि घिमिरेले खेलकुद, डा. प्रदिप भट्टराईले चलचित्रसँग सम्बन्धित ग्रीन कार्ड लिएका छन् । दिनेशजंग शाह, राजेश मिश्र र गिरिश पोखरेलले एक्ट्रा अर्डिनरी ग्रीन कार्ड प्राप्त गरेका हुन् । यसरी नै तृष्णा कुँवर, पवनकली शो की लुनिभा तुलाधर, ज्योति देवकोटा, प्रेम बानियाँ एक्स्ट्रा अर्डिनरीवाला हुन् भने एसाइलम उल्लेख गरी अमेरिका बस्नेहरूमा सानुबाबु सिलवाल र रामप्रसाद खनाल रहेका छन् ।

एसाइलम उल्लिखित ग्रीन कार्ड लिएको साढे चार वर्षपछि मात्रै परिवार भेट्न नेपाल फर्किन सक्ने व्यवस्था भए पनि कतिपय भने भारत हुँदै आउने गरेका छन् । पहिला-पहिला व्यवस्थाविरोधी, त्यसपछि माओवादी द्वन्द्व, राजतन्त्रको पक्षधरलगायतका कारण दर्शाउँदै नेपालीहरूले एसाइलम कार्ड लिने गरेका छन् । डिभी (डाइभर्सिटी भिसा) चिट्ठा परेर जाने पनि छन् । जसमा लेखनाथ भण्डारी, संगम बानियाँ र पुण्य गौतम पर्छन् । गुणराज लुईंटेल भने इन्फर्मेसन टेक्नोलोजीसँग सम्बन्धित रहेर काम गर्छन् ।



# एउटा हातमा विदेशको राहदानी, अर्कोमा नेपालको आम्दानी

यौनकाण्ड, दोहोरो नागरिकता प्रकरण, भाडामा बसेको घरै जलाइदिएका पर्वतारोही निर्मल पुर्जा (निम्स) फेरि अर्को बदमासीमा मुछिएका छन् । विश्वका १४ वटा उच्च हिमाल आरोहण गरेर कीर्तिमान राखेका पुर्जाले गत १३ जेठमा सगरमाथा आरोहणको क्रममा आफैंले डोरी काटेर सामाजिक सञ्जाल इन्स्टाग्राममा भिडियो पोष्ट गरे । उक्त भिडियोमा बाल्कोनी र साउथ समिटबीचको भाग काटिएको र आरोहणमा समस्या भएको दाबी गरिएको छ । 'टाँगिएको डोरी बाल्कोनी र साउथ समिटबीचको भाग काटियो, जसले गर्दा आरोहणमा समस्या भयो ।' उक्त सन्देश क्षणभरमै भाइरल भयो । अनि, आरोहणको तयारी गर्दै आधार शिविरमा रहेका मात्र होइन, क्याम्प टुसम्म पुगेकाहरू पनि तनावमा फसे । उनले सोही कारण आरोहीहरू फिर्ता हुनुपरेको उदाहरणसमेत दिए । पुर्जाले आरोप लगाएलगत्तै अर्थात् १३ जेठको १२ बजेर ४५ मीनेटमा पायोनियर एड्भेञ्चर प्रालिको टोलीले सफल आरोहण गरेको थियो । पर्वतारोही र पर्यटन विभागले पुर्जाको उक्त दावीप्रति विज्ञप्ति निकालेर आपत्ति जनायो, १४ जेठमा । पुर्जामाथि कारवाही माग गर्दै पर्वतारोहण सञ्चालक संघले कारवाहीको माग ग-यो । शेर्पाहरूले आपत्ति जनाउँदै छानबिनको माग गरे । यसपछि विभागले महानिर्देशक रुद्रप्रसाद पण्डितको नेतृत्वमा समिति बनायो । उक्त समितिले दुई पटक स्पष्टीकरण सोध्यो । चित्तबुझ्दो स्पष्टीकरण नदिएपछि प्रहरीसामु बयान गरायो । अनुसन्धानबाट शेर्पाहरूले नभई निम्स पुर्जा आफैंले काटेको पत्ता लागेको छ । विभागले उनलाई पर्वतारोहणमै बन्देज लगाउने गरी सिफारिस गरेको भए पनि उक्त फाइल अगाडि बढाउनबाट रोक्नका लागि पुर्जाले शक्तिकेन्द्र प्रयोग गरिरहेका छन् ।

पर्वतारोहीहरूका अनुसार उनकै लहैलहैमा लाग्दा एक जना क्याप्टेनले जागिरबाट हात धुनुपरेको छ । सगरमाथाको बेस क्याम्प (क्याम्प टु) मा परमिट नलिई हेलिकप्टर लैजान निषेध छ तर पुर्जाले जबर्जस्ती लैजाँदा ती पाइलट निलम्बित छन् । केही वर्षअघि आमदब्लम हिमाल आरोहणका क्रममा पुर्जाले कुवेतको झण्डा फहराएको विषयसमेत विवादित बन्न पुगेको थियो । डेढ वर्षदेखि कपनमा टंक घिसिङको घर भाडामा लिएर एलाइट्स एक्सपिडिसन सञ्चालन गर्दै आएका थिए । त्यहाँ हिमाल आरोहणका क्रममा प्रयोग हुने अक्सिजन ग्यासलगायत संवेदनशील सामग्री थिए । उक्त सामग्री बिष्फोट हुँदा कामदारको ज्यान गयो । घर पूर्णतः क्षतिग्रस्त ।



पीडित पक्ष न्याय खोज्दै काठमाडौं जिल्ला अदालत पुग्यो । अदालतले पुर्जालाई साढे दुई करोड क्षतिपूर्ति र २० महिनाको घरभाडा १५ दिनभित्र भराउन आदेश दिए पनि आलटाल गर्दै आएका छन् । नेपालको कानुनमा दोहोरो राहदानी प्रतिबन्धित छ तर रवि लामिछानेलाई माथ खुवाउने गरी ०१२ जुन २८ मा बेलायती पासपोर्ट बनाएको र उक्त पासपोर्ट निष्क्रिय नपारी ०१६ मार्च १५ मा नेपाली पासपोर्टसमेत निकालेको समेत उनलाई चिन्ने र जान्नेहरूले बताएका छन् । पुर्ख्यौली घर म्याग्दी भएका यिनलाई जोगाउन माओवादी सांसद सुरेश आलेमगर र कल्पना मियाँले संसदमै अभिव्यक्ति दिएको भिडियो हेर्न सकिन्छ । यस्तै सोनाम लाक्पा शेर्पाले केपी ओलीलाई भेटेरै निर्मल पुर्जालाई जोगाउन पहल गरिरहेका छन् । सामाजिक सञ्जाल ट्विटरमा उनलाई पछ्याउनेको संख्या १ लाख ३४ हजार छ । कसैलाई फलो नगर्ने उनले गंगा दाहाल, नेपाल प्रेससहित आफ्नै कम्पनीका तीन वटा एकाउण्ट मात्रै फलो गरेको देखिन्छ । शेर्पाहरूले भने निम्सलाई कम्तीमा दश वर्ष नेपालका हिमाल आरोहणमा प्रतिबन्ध लगाउने माग गर्दै आएका छन् ।

**निर्मल पुर्जा भर्सेज सेभेन समिट : यसरी खोल्दै छन् पोल**

सन् २०१९ मे महिनामा सगरमाथाको ट्राफिक जामको तस्बिर सार्वजनिक गरेर चर्चामा आएका थिए निर्मल पुर्जा । पछि सोही साल अक्टोबर २९ मा ६ महिना ६ दिनबीच विश्वका आठ हजार मिटर माथिका सबै १४ चुचुराको शिखरमा उभिएर विश्व कीर्तिमान बनाए । यसले उनको नाम चल्यो । दाम बन्यो । तर, पुर्जा विवादरहित भने थिएनन् । उनी बेलायती नागरिकताधारी थिए । आफ्नो सहजतामा नेपाली नागरिकता प्रयोग गर्थे । चीनको सिसापाङ्मा हिमाल आरोहण बन्द थियो । माधव नेपालको शक्ति लाएर नेपाली नागरिकको रुपमा आरोहणको अनुमति लिए । यो कुरा उनको किताब 'बियोण्ड पसिबल'मै लेखिएको छ । पछि आमादब्लम हिमालमा विदेशी झण्डा फर्फराएको अर्को विवाद छ । क्याम्प टुमा सीधै हेलिकप्टर लगेको विवाद पनि छ । अर्को विवाद चैं उनले खुम्बु आइसफलमा बिनाअनुमति अभ्यास गराउँदाको हो । पछिल्लो समय डोरी काटिएको अर्को विवाद छ । अमेरिकी अखबार न्यूयोर्क टाइम्सले त उनीमाथि यौन दुर्व्यवहारको समाचार पनि बनायो । केही वर्षअगाडि आफ्नो तस्बिर दुरुपयोग गरेको भनेर मुद्दा दायर गरेको न्यूयोर्क टाइम्सले अहिले पुर्जालाई यौन दुर्व्यवहारको समाचार लेखेर विवादमा ल्याएको छ । पर्यटन विभागले कारबाही गर्न मन्त्रालयलाई सिफारिस गरेको छ ।

विवादै विवादको ब्राण्ड बनेका निर्मल पुर्जा अर्थात् निम्म दाइको विवाद यो तहमा ल्याउनमा उनको मात्रै छैन । त्यसमा व्यापारिक मामिला पनि छ । पुर्जाको एलिट एक्स्पिड र संखुवासभाका शेर्पा दाजुभाइको सेभेन समिटको व्यावसायिक लफडाले पनि विवाद धेरै तानिएको हो । यी दुई कम्पनीबीच संसारका महँगा महँगा ग्राहकलाई कसले ल्याउने भन्ने प्रतिस्पर्धा छ । उनीहरू एकअर्कालाई सक्न लागेका छन् । पर्यटन विभागका कर्मचारीहरूदेखि सगरमाथा आधार शिविरका सम्पर्क अधिकारीहरूलाई आ-आफ्ना लाइनका बनाएर आफूअनुकूल काम गराउन उनीहरू सिपालु छन् । नक्कली आरोही प्रमाणपत्र बनाउने, चुचुरोमा नपुगेकोलाई चुचुरोमा पुगेको भन्ने र स्कि तथा ड्रोन चलाएर मापदण्ड बिगार्नमा सेभेन समिट अग्रणी छ । अहिले सेभेन समिटका यी कुरा मिडियामा पुर्जा पक्षधरले ल्याएको छ । उनीहरूको मिल्ती हुञ्जेल ती गुपचुप थिए । अहिले सतहमा आएका छन् । सरकारी सम्पर्क अधिकृतहरूले सेभेन समिट र निर्मल पुर्जाकै प्रायोजनमा आधार शिविरमा खानपान गर्छन् । उनीहरूकै हेलिकप्टरमा सवार हुन्छन् । उनीहरूका ग्राहकका कमजोरीमा बोल्दैनन् । तर, विपक्षीको सानो कुरामा पनि कारबाही गर्छन् । कारबाही सिफारिस गर्छन् । अरु त अरु सदनमा पनि सांसदहरू विभाजित छन् । व्यापारी तथा कांग्रेस सांसद राजेन्द्र बजगाईं सेभेन समिट पक्षधर हुन् । सेभेन समिटका मुख्य अनुहार कांग्रेसी नै छन् । माओवादी सांसद कल्पना मियाँ कुसारीले भने निर्मल पुर्जाको पक्षमा बोलिन् । यी दुई कम्पनीको विवाद अहिले पर्यटन विभाग, सदनदेखि सञ्चारमाध्यम चलेको छ । यसको नयाँ निचोड आउन नयाँ सत्ताको गणितले के कसो पार्छ त्यो भने हेर्न बाँकी नै छ ।

# सहकारीको ठगीले ब्याजमा बाधा

नेपालमा देखिएको सहकारी ठगी प्रकरणले बचतकर्ताहरू आतंकित हुनुका साथै सरकारी र निजी बैंकहरूलाई पनि धक्का लागेको छ । निजी बैंकहरू इतिहासमै नभएको बचतको ब्याजदर घटाउन बाध्य भएका छन् । बैंकमा पैसा राख्न डराएर हो कि ? ब्याजदर कम भएर हो कि : खास कारण विश्लेषण भएको छैन । यस्तो बेला पनि बैंकका सिइओ (चिफ एक्जिक्युटिभ अफिसर) हरूको तलब सुविधा भने उस्तै छ ।

कमाइ र आम्दानी बचत गरी त्यसको ब्याजका भरमा गुजारा चलाउने कर्मचारी, शिक्षक, सेना, प्रहरीलगायत सरकारी निकायबाट निवृत्तिका भरमा गुजारा चलाउने व्यक्तिहरू ब्याजदर घटेपछि मारमा पर्ने नै भए । यसबीच बैंकबाट ऋण लिने व्यक्ति र कम्पनी पनि घट्दै गए । ठगीका कारण सहकारी संस्थाप्रति विश्वास नभएपछि बैंकमा बचत रकम वृद्धि भयो । तर सोको तुलनामा ऋण लगानी भने हुन सकेन । जसले गर्दा बैंकहरू आफूले खाने कमिशन र कर्मचारीलाई दिने सुविधा घटाउनुको बदला डिजोपिटरले खाइपाइ आएको ब्याजदर घटाउने रणनीतितिर लागे । यसबाट सरकारी स्वामित्वका नेपाल बैंक, कृषि विकास बैंक, राष्ट्रिय वाणिज्य बैंक कम प्रभावित देखिए पनि कमर्सियल बैंकहरू सहकारी ठगी प्रकरणका कारण मज्जैले प्रभावित भएको तथ्यांक हेर्दा थाहा पाइन्छ । सरकारी बैंकहरू कम प्रभावित हुनुका पछि सरकारले विभिन्न कार्यक्रममा ऋण लगानी गरेबापत दिने अनुदान पनि एउटा कारण हो । जस्तै : किसानका लागि उन्नत प्रविधि खरिद, बिउविजन आदिमा त्यस्ता बैंकलाई ७५ प्रतिशतसम्म ब्याज अनुदान उपलब्ध गराउने नियम छ । यी बैंकको लेनदेन तल्लो तहका नागरिकसँग हुने भएकोले निरन्तर कारोबार चलिरहेको हुन्छ । ऋण पनि नडुब्ने गरी लगानी भएको हुन्छ किनभने सरकारले अतिरिक्त भुक्तान गरिरहन्छ । कृषि क्षेत्रको कुरा गर्दा बिमा रकम ८० प्रतिशत सरकारले तिरिदिन्छ भने २० प्रतिशत मात्रै किसानले बुझाए पुग्छ । सरकारी बैंकले सरकारी कारोबार गर्न पाउने हुनाले त्यति सितिमिति प्रभावित हुँदैनन् भने खान्दानी व्यापारीको लगानी र कारोबार पनि यिनै बैंकमा धेरै हुने गरेको पाइन्छ ।

यसबीच, ०८१/८२ को बजेट निर्माणमा संलग्न कर्मचारी फ्रान्सलगायत विभिन्न मुलुकको भ्रमणमा निस्केको निस्क्यै छन् । अर्थमन्त्रीले बजेट सत्र समाप्त भएपछि हरेक वर्ष बजेट बनाउन खटिएका कर्मचारीलाई अघोषित रूपमा पुरस्कार दिएजस्तै विदेश भ्रमणमा पठाउने परम्परा छ । यो चलनलाई यसपालि पनि निरन्तरता दिइएको छ । यस्ता भ्रमणमा शाखा अधिकृत, उपसचिव र सहसचिव तहसम्मका कर्मचारी सहभागी छन् । यो भ्रमणले एकातिर साधारण र प्रशासनिक खर्च बढ्यो भनेर कराइन्छ, अर्कोतिर राजस्व वृद्धि गर्न सकिएको छैन । सरकार ऋणमाथि ऋण लिन बाध्य छ । अर्कोतर्फ बजेट सत्र नसकिँदै स्पष्ट कारण र उद्देश्यबिना बजेट महाशाखाका कर्मचारीले फजुल खर्च गर्ने चलनलाई परम्पराकै रूपमा अँगालेका छन् । विदेशी स्रोत र सहयोगमा होइन नेपाल सरकारकै पैसाबाट टिएडिए खाएर घुम्न निस्केका निस्क्यै छन् । अहिले सो महाशाखामा कार्यरत डेढ दर्जनभन्दा बढी कर्मचारी विदेश भ्रमणमा गएको बताइन्छ । यीमध्ये अन्तशुल्कको स्टिकर छपाइमा मुख्यसचिव वैकुण्ठ अर्यालसँगै मुद्दा चलाइएका सहसचिव रितेश शाक्य फ्रान्स गएका छन् भने अन्य कर्मचारी मुलुक बाँडेर निस्केका छन् ।

# तालिम गर्दागर्दै २ जनाको गयो ज्यान

सशस्त्र प्रहरी बल नेपालको तालिमका क्रममा दुई जनाको ज्यान गएको छ । सेनापछिको कठोर तालिम हल्चोकस्थित मुख्यालयले तयार पारेको पाठ्यक्रमअनुसार सञ्चालन हुने गरेको छ तर केही केन्द्रमा लापरबाही गरिएको अवस्था छ ।

ककनीस्थित तालिम केन्द्रमा असार १ गते मृत्यु हुनेमासहायक हवल्दारहरू सञ्जय बल र महेन्द्र लामा छन् ।

पाथीभरा जवान तालिम शिक्षालय झापामा सञ्चालित सि.सं. २३७ ख आधारभूत तालिमका दौरान जवान धिरेशकुमार मण्डलको गोडा भाँचिएको छ । दाहिने गोडाको थप उपचारका लागि काठमाडौं ल्याइएको छ । पश्चिम नवलपरासी बर्दघाटमा तालिमरत जवान गौरी परियारलाईसमेत उपचारार्थ काठमाडौं ल्याइएको छ । ककनीमा एसएसपी राजेन्द्र खड्का, झापामा कमल तिमिल्सिना र बर्दघाटमा विश्व भट्टराई प्रमुख छन् । तिमिल्सिना पूर्वआइजिपी शैलेन्द्र खनालका अति विश्वासपात्र हुन् । उनले खनाललाई कुम्भमेलामा आउँदा कोशी नदीमा डुंगा र इलाममा घोडासँगै सुरक्षा दिएका थिए । तालिम केन्द्रका प्रमुख आफ्नो जिम्मेवारी र दायित्वमा भन्दा अवकाशप्राप्त हाकिमलाई बोकेर घुम्न हिँडेको भन्दै त्यतिबेला पकलीको बाहिनीमा डिआइजी अञ्जनीकुमार पोखेलसामु धेरैले कुरा काटेका थिए ।

भट्टराई आगामी भदौमा अनिवार्य अवकाशमा जाँदै छन् भने खड्का दुई महिनाअघि मात्र ककनी गएका हुन् । प्रधान कार्यालयको निर्देशन विपरित खड्काले मोटरसाइकल हाँक्ने छुट दिएकाले पछिल्लो पटक दुई जनाको ज्यान गएको आरोप छ । नियमानुसार तालिमरत व्यक्तिलाई मोटरसाइकल चलाउन निषेध छ । गत भदौमा सशस्त्रले केही तालिम केन्द्रको स्तरोन्नती गरेर एसएसपीलाई पठाएको थियो । सशस्त्र प्रहरीमा हाल १२ वटा तालिम केन्द्र छन् ।

## सुमनासामु...

मन्त्रीको नैतिक जिम्मेवारी हुन्छ कि हुँदैन ? आमरुपमा यस्ता प्रश्न उठिरहँदा मन्त्री सुमना र रास्वपाका केही नेताले भने परीक्षा प्रणालीका कारण यो अवस्था आएको तर्क गरिरहेका छन् । शिक्षा क्षेत्रका विज्ञहरूको कुरा सुन्ने हो भने एसईईको नतिजा बिग्रनुमा बढी नीतिगत र केही व्यवहारिक पक्ष जिम्मेवार छन् । गुणस्तरहीन शिक्षक, विद्यालयमा भौतिक पूर्वाधारको अभाव, सिकाइमैत्री वातावरण नहुनुजस्ता विषयले परिणाम प्रभावित पारेको विज्ञहरूको बुझाइ छ । अझ खासगरी शिक्षकहरूको भूमिका निर्णायक मानिन्छ । तत्कालीन शिक्षामन्त्री गोविन्दराज जोशीले पार्टीका कार्यकर्तालाई शिक्षक नियुक्तिका नाममा विद्यालयमा भर्ति गरेपछि ०५२ सालपछि शिक्षामा बेतिथी शुरु भएको धेरैको दाबी छ । पार्टीमा आवद्ध शिक्षकलाई नियुक्ति दिने प्रचलन त्यसबेला शुरु भएको र पछिसम्म पनि आन्दोलन गर्दै फेरि थमौती पाउँदै जाँदा अहिले त्यही संस्कृति स्थापित भैसकेको छ । अहिले त अवस्था कस्तो छ भने, पार्टीको झोला नबोक्ने शिक्षक मुश्किलले भेटिन्छ । शिक्षक सेवा आयोगले सञ्चालन गर्ने परीक्षामा न्यून संख्यामा शिक्षकहरू उत्तीर्ण हुनुले विद्यालयमा गुणस्तरीय सिकाई छैन भन्ने प्रष्ट हुन्छ । शिक्षक लाइसेन्स परीक्षामा ४० नम्बर ल्याए उत्तीर्ण हुने व्यवस्था छ । १०० पूर्णाङ्कमा ४० नम्बरसमेत ल्याउन नसक्ने शिक्षकबाट गुणस्तरीय शिक्षण कसरी होला ? बिडम्बना ! लाइसेन्स परीक्षामा फेल भएका शिक्षकहरूले राजनीतिक प्रभाव र पहुँचको आधारमा निरन्तरता भने पाइरहेका छन् ।

सरकारले शिक्षकलाई पर्याप्त सेवा सुविधा नदिएका कारण शिक्षाको गुणस्तर खस्केको तर्क पनि सुनिन्छ । शिक्षामन्त्री स्वयं र उनी आवद्ध दलका कतिपय ठूलै नेताहरूले पनि त्यसो भनेका छन् । तर, एसईईमा उत्कृष्ट नतिजा दिने निजी विद्यालयको तुलनामा सरकारी स्कूलका शिक्षकहरूको पारिश्रमिक आकर्षक छ । उनीहरूलाई पेन्सन, उपदानलगायत अन्य भत्तासमेत राज्यले उपलब्ध गराउँदै आएको छ ।

यस अर्थमा शिक्षा क्षेत्रका बेथिति सुधार्न आमूल परिवर्तनको खाँचो देखिन्छ । त्यसका लागि कानुनी, नीतिगत र संरचनागत सुधार गर्दै शिक्षकहरूको गुणस्तर अभिवृद्धिमा शिक्षा मन्त्रालयले काम गर्नुपर्ने हुन्छ । यसमा सहमत हुँदै मन्त्रालयका एकजना सहसचिवले भने, यस्तो नतिजा आउँदै छ भन्ने हामीलाई पहिले नै थाहा थियो, तर लामो समयदेखिको बेथिति एकैचोटी सुधार गर्न सकिँदैन । अर्को वर्ष राम्रो नतिजा ल्याउने हो भने अहिलेदेखि नै काम गर्नुपर्छ ।'

यसपटक एसईईमा अधिकांश विद्यार्थी विज्ञान, गणित र अंग्रेजी विषयमा फेल भएका छन् । विगतका वर्षहरूमा पनि यी तीन विषयमै नतिजा खराब आइरहेको थियो । शिक्षा मन्त्रालयले यसतर्फ किन ध्यान नदिएको ? ती सहसचिवका अनुसार विज्ञान, गणित र अंग्रेजी विषयको दरबन्दी थप्न यसपटक अर्थ मन्त्रालयमा पहल भएको हो । तर, अर्थले बजेट अभावको कारण देखाएर दरबन्दी थप्न सहमति दिएन ।

अर्को चिन्ताको विषय चैं सरकारी विद्यालयमा राज्यको यत्रो लगानी बालुवाको पानी भैरहँदा विद्यालय र समुदायको सम्बन्ध क्रमशः पातलिँदै छ । समुदायको अपनत्व घट्दै जाँदा विद्यालयहरू बेवारिसेजस्तो बनिरहेका छन् । यसै पनि अहिले अत्यन्त निम्न आयस्रोत भएका गरिब र विपन्न मात्र बस्ने थलो बनिरहेको छ गाउँ । थोरै आर्थिक हैसियत भएकाहरू शहर केन्द्रित छन्, र उनीहरूका सन्तान निजी स्कूलमा भर्ना गरिन्छन् । समग्रमा सरकारी विद्यालयप्रति नागरिकको आकर्षण नै छैन । त्यसैले सरकारी स्कूललाई समुदायसँग जोड्न नसके जतिसुकै लगानी खन्याए पनि गुणस्तर सुधार हुँदैन भन्नेमा शिक्षा मन्त्रालय पनि जानकार छ ।

**खाँचो आमूल सुधार, मन्त्रीको प्राथमिकता अर्कै**

शिक्षामा गुणस्तर सुधारका लागि विद्यमान शिक्षा नीतिलाई समयानुकूल बनाउनुपर्ने आवश्यकता छ । तर, स-साना कुरामा अल्झिने र त्यसैलाई प्रचारमा ल्याउने रास्वपाको राजनीतिबाट आएकी शिक्षामन्त्री सुमना श्रेष्ठले नीतिगत तहमा त्यो तदारुकताका साथ काम गर्न सकिनन् । 'ठूला कुरा गर्ने तर, झिना मसिना काममा अल्झिने' गरेको आरोप खेपिरहेकी उनको मुख्य चासो विद्यार्थीका गुनासा सुन्ने, कुन विद्यालयले कति शुल्क लिए र कहाँ कति विद्यार्थी भर्ना भएजस्ता नीतिगत महत्व नराख्ने स-साना कुरामा देखिने मन्त्रालयका कर्मचारी बताउँछन् ।

'ठुल्ठूला कुरा गरेर मात्र केही हुनेवाला छैन । विद्यालयको समग्र सुधारमा केन्द्रित हुनुपर्छ । मन्त्रालयले गर्ने नीतिगत सुधारको काम हो, विद्यार्थीलाई मन्त्रालयमा बोलाएर मन्त्रीले उनीहरूको गुनासो सुन्ने होइन', यसबारेका जानकार एक कर्मचारी भन्छन्, 'विद्यार्थीका दैनिक समस्या त हेडमास्टर र क्याम्पस प्रमुखले समाधान गरिहाल्छ नि ! मन्त्रीले त उनीहरूलाई निर्देशन दिने र परिणाम खोज्ने हो ।'

**खेदाइमा कर्मचारी**

शिक्षा मन्त्रालयको जिम्मेवारी सम्हाल्दै गर्दा तीन महिनामा परिणाम देखाउने मन्त्री सुमनाको दाबी थियो । त्यसका लागि आवश्यक परे 'ब्युरोक्रेटिक' संरचना नै बदल्ने उत्साह बोकेर मन्त्रालय छिरेकी उनले सुधारको कुनै संकेत दिन त सकिनन् नै, बरु शिक्षक र कर्मचारी सरुवामा अतिरिक्त चासो राखेको आरोप लागिरहेको छ । जबकि अहिले शिक्षक सरुवा, बढुवालगायत समग्र विद्यालय व्यवस्थापनको जिम्मा स्थानीय सरकारलाई छ । संविधान र कानुनमै व्यवस्था गरेर स्थानीय तह मातहत गैसकेकाले मन्त्रालयले चाहेर पनि सरुवाको निर्णय गर्न मिल्दैन । तर, शिक्षामन्त्री सुमनाले भने शिक्षक सरुवाका लागि मन्त्रालयका कमर्चारीलाई चर्को दबाब दिने गरेको बुझिएको छ । 'मापदण्ड बनाएर पाँच वर्ष पुगेकालाई सरुवा गरिहाल्नुपर्‍यो भन्ने उहाँको बुझाइ छ, तर स्थानीय सरकारको कार्यक्षेत्रमा पर्ने सरुवा-बढुवामा निर्णय गर्न संविधानले नै दिँदैन', उनै सहसचिवले भने, 'जबर्जस्ती गरे पनि अदालत गएर तुरुन्त स्टे-अर्डर ल्याइहाल्छन् । त्यसकारण यतातिर लाग्ने नै होइन, सिष्टम रिफर्म गर्ने हो मन्त्रालयले ।'

यसै सन्दर्भमा मन्त्रालय स्रोतले एउटा पुरानो घटना सुनायो- अशोक राईकै पालामा मन्त्रालयका कर्मचारी दिपनारायण श्रेष्ठ इण्डोनेशिया जाने तय भैसकेको थियो । नेपालको शैक्षिक क्षेत्रमा सहयोग गर्दै आएको अन्तराष्ट्रिय संस्था 'ग्लोबल एजुकेसन फाउण्डेसन'ले आयोजना गरेको कार्यक्रममा भाग लिन गए । तर, 'किन विदेश भ्रमणमा गएको?' भनेर उनको सरुवा गरियो । मन्त्रालयको योजना शाखामा रहेका उनलाई बजेटको मुखमा सरुवा गरेर पाठ्यक्रम विकास केन्द्रतिर धपाइएको छ । त्यस्तै, एकजना राजु पराजुली नामक कर्मचारीको फाइल मिल्काइदिएको विषय पनि मन्त्रालयमा चर्चा हुने गर्छ । अपूरो विवरण लागेको भन्दै रिसाएकी मन्त्री श्रेष्ठले 'यस्तो पनि ल्याउने हो' भनी फाइल खोसेर फ्याँकेको देख्नेहरू बताउँछन् ।

मन्त्रालय स्रोतका अनुसार यसअघिका मन्त्री अशोक राईले भने नीतिगत सुधारका लागि चासो देखाएका थिए । आफैँ पनि लामो समयदेखि स्कूल चलाउँदै आएका उनले नीतिगत र कानुनी सुधारमा जोड दिए पनि सुमनाको जस्तो सक्रियता भने देखाउन सकेनन् ।

## राष्ट्रपतिका...

थिए, 'फुटबल हेरम्, यतै बसम् न !' उनले मानेनन्, राजदूतसँगै जान्छु भने । त्यसबेला ठूलो पानी परिरहेको थियो । एनआरएन नेताहरू कुल आचार्य, विश्व पण्डितहरू पनि सँगै थिए । उनीहरू त्यसै दिन लण्डन फर्किने कार्यक्रम थियो । पानी परेकै कारण साँझ ७-८ बजेतिर ट्याक्सी बोलाएर विमानस्थलतिर लागे । जहाजचाहिँ राति दश-साढे दशतिर उडेको खबर आयो । चिन्तन पनि हिँडेपछि दिलसँग तत्काल सम्पर्क भएन । उनी चार-पाँच दिनदेखि राष्ट्रपतिको खानपिन व्यवस्थापनमा निकै व्यस्त थिए । अन्तिम दिन पनि भोजमा सय जनाका लागि अर्डर गरिएको थियो । तर, मान्छे थपिने अनुमानपछि १५ युरोमा एक सय २० जनाका लागि दश प्रकारको खाना बनाइयो । राष्ट्रपतिका निम्ति उहाँ बसेकै होटेलमा खाना ल्याइदिनु भनिएपछि उहाँसँगै सुरक्षाकर्मी र चिकित्सकका निम्ति खाना पुर्‍याइयो । उक्त भोजका निम्ति सबैलाई फोन गर्ने क्रममा राजदूत पत्नीले जर्मनमै रहेकी राष्ट्रपति पुत्री तथा चिन्तनकी बहिनी अवज्ञालाई पनि खबर गरेकी थिइन् । तर, त्यसरी चिन्तनले भोजकै क्रममा गरेको व्यवहार ठीक नभएको उनैले स्थानीय नेपालीसँग भन्ने गरेकी छन् । नोकरजस्तो व्यवहार गर्ने, जथाभावी बोल्नेजस्ता काम चिन्तनबाट भएको उनको गुनासो थियो । त्यसपछि दिललाई अवज्ञाले फोन गरेर भनिन्, 'दाजु हाइटेम्परको भएका कारण यस्तो भएको हुनुपर्छ ।' यति कुरा भइसक्दा राजदूतसहितको टोली पाहुनालाई बिदा गर्न विमानस्थल पुगिसकेको थियो । चिन्तनले प्रयोग गरेको मोबाइल अफ थियो । दिलले राजदूतको नम्बरमा फोन गरेर चिन्तनसँग कुरा गर्न खोजे । फोन लिएपछि उल्टै निहुँ खोज्न थाले । बेलुकीको भोजका क्रममा रिजर्भ टेबुल कसले राख्न लगाएको भनी झर्किँदै प्रश्न गरे र, फोन फुत्त फ्याँकिदिए । त्यसपछि भोजका क्रममा लगिएका आफ्ना सामान फिर्ता ल्याउने कामका लागि दिल दूतावासतिर लागे । दूतावास पुग्न नपाउँदै फोन आयो, चिन्तन हराएको भनेर । नेपाल जाने दुई जहाजमध्ये उनी दुबैमा फेला नपरेको खबर थियो । एउटा उडान साढे एक बजेको र अर्को साढे तीन बजेको थियो । तर, दुबै प्लेनमा उनी नउडेको भन्ने खबरपछि फोनका घण्टी बज्ने क्रम पनि बढ्यो । निकटस्थ विश्व, कुल आचार्य, उनकै पत्नीसहित नगेन्द्र श्रेष्ठ र जर्मनबाट दिल गुरुङ खोजीमा जुटे । शुरुमा विमानस्थलमै बुझ्ने काम भयो । केही न केही भएको कुरा त राजदूतको भनाइबाटै थाहा पाइसकेका थिए । राजदूतले आफ्नो कूटनीतिक अधिकार प्रयोग गरेर भित्रसम्मै खोज्नसक्ने कारण खोजीका निम्ति उनलाई पनि त्यहाँ आउन अनुरोध गरियो । तर, उनी ढिला पुगे । साँझ साढे सात बजे 'अन द वे' भन्दै थिए, अरुचाहिँ पुगिसकेका थिए । उनी पुग्दा रातको साढे दश बज्यो । विमानस्थल छिर्दा रातिको ११ भन्दा बढी समय भइसकेको थियो । शुरुमा उनीहरूले टर्मिनल टु मा खोजे, भेटिएनन् । त्यसपछि टर्मिनल वनमा गए । प्रहरीले चिन्तन त्यहाँबाट दिउँसो ३:४५ मै निस्किएको बताए । त्यो सूचना गलत थियो । किनभने, उनलाई उक्त समयभन्दा अघि १५ देखि २० मीनेट खोजिएको थियो । यसपछि विमानस्थलमै खोजौं भन्ने दिलको प्रस्ताव रह्यो । राजदूत रामकाजीले भने, 'अब कहाँ यहाँ भेटिन्छ र' भन्दै आफू पन्छिए । दिलहरू फेरि टर्मिनल टुमा गएर २०-२५ मीनेट खोजीमा जुटे । नभेटिएपछि फर्किए । राजदूत घरतिर लागे, अरु त्यतै खोज्न भनेर हिँडे । यसपछि रातिको साढे दुई बजेतिर फेरि चिन्तनकी पत्नीको फोन आयो । एउटा बक्सभित्र चिप राखिएको रहेछ । त्यही आधारमा लोकेशन ट्र्याक गरियो । त्यसमा उनी बर्लिनभन्दा टाढा भएको देखियो । यसपछि एउटा ट्याक्सी लिएर दिल रातिको बिहान, अर्थात् ३-४ बजेको आसपास ट्र्याक भएको ठाउँमै पुगे । उक्त ट्र्याक बक्स पुलिस स्टेशनमा रहेछ । त्यहाँ पुगेपछि थाहा भयो, चिन्तनलाई अस्पतालमा राखिएको रहेछ, हत्कडीसहित । केही बेरमै पत्नी नविना पनि पुगिन् । बुबालाई विमानस्थलमा छोडेर चिन्तन राजदूत निवासमा बस्न भनी गएका थिए । उनका सामानचाहिँ दूतावासको गाडीमा थियो ।

उनलाई फेला पारिएको अस्पतालमा भेटिँदा स्वास्थ्यमा सुधार आइसकेको थियो । त्यसपछि एउटा ह्वील चेयरमा राखेर निकाल्न खोजियो । तर, प्रहरी आएर रोके । उनीहरूले भनेअनुसार, उनले चार-पाँच दिन पहिला पनि यस्तै हर्कत गरेका रहेछन् । त्यसदिन राति साढे ११ बजेसम्म विमानस्थलको टर्मिनल टुमै रहेछन् । त्यहाँ चिन्तनले विभिन्न नाटक गरेपछि प्रहरीले नै डाक्टर बोलाए । प्रहरी पुगेपछि झनै लफडा गरे । त्यसबेलासम्म उनको साथमा झोलादेखि सबै सामान थियो । पछि घडी हरायो, प्यान्ट छैन र राति ३ बजे प्रहरीले जंगलमा नांगै भेट्यो । उनले यस्तो अस्वभाविक काम किन गरे ? राजदूत निवासमा बस्दा के खाएका थिए ? भनेर सोधखोज शुरु भयो । राजदूतले जम्मा एक ग्लास वाइन पिएको सुनाए । तर, एउटै ग्लासको वाइनले त्यत्रो तमाशा कसरी गरायो ? प्रश्न अझै अनुत्तरित छ । चिन्तनसँग होश हुँदा दश हजार पाउण्ड थियो । सबै पैसा हरायो । दुईदिनपछि प्रहरीमा लिखित निवेदन दिइयो । त्यसपछि प्रहरीले उनी भेटिएको ठाउँमा गएर हेर्‍यो । त्यहाँ नजिकै रेष्टुरेण्ट छ । उनले आफ्नो नेपाली राहदानी त्यहीँ छाडेका थिए । उक्त राहदानी फिर्ता लिइयो । सँगै गाडीको चाबी, आइफोन पनि भेटियो । चिन्तन आफैंले रेष्टुरेण्टमा दुई हजार पाउण्ड टिप्स दिएको भनेपछि अरु पैसाको खोजी भएन ।

विमानस्थलमा देखाएको अस्वभाविक व्यवहारका कारण विमानस्थल प्रशासनले उनलाई अब टिकटबिना भित्र छिर्न नदिने गरी एउटा चिट थमाएको छ । त्यसपछि उनी भेटिएको जंगलमा ट्रेन चढेर पुगेका रहेछन् । सामानजति विमानस्थलमै अलपत्र थिए । त्यसअघि उनीसँग विमानस्थलको ट्रान्जिटसम्म पुग्ने कार्ड भएको कुरा दूतावासका सवारी चालकले बताएका थिए । अस्पतालबाट डिस्चार्ज गरेपछि उनलाई लिन पुगेकी पत्नी नविताले आफूसँगै लण्डन लिएर गएकी छन् ।

काठमाडौंस्थित परराष्ट्र मन्त्रालयका एक सहसचिवले बताएअनुसार, जर्मनमा ४४ वर्षदेखि बस्दै आएका दिल गुरुङले दुःख पाउन तयार नभएको भए चिन्तन तत्काल नभेटिनसक्थे । उनले रात र दिन नभनी गरेको मेहेनतका कारण मात्र सजिलै फेला परेका हुन् । नेपालको मनाङ स्थायी ठेगाना भएका दिल नेपाली कांग्रेसका नेता तथा पूर्वमन्त्री पाल्तेन गुरुङका भाइ हुन् । ***– विश्वमणि सुवेदी***

## समस्या...

*थापाकै घरमा दुईचोटी गोप्य भेटवार्ता भैसकेको थियो ।*

*असार १७ गते बेलुका साढे १० देखि मध्यराति सवा १ बजेसम्म चलेको छलफलमा काँग्रेसका तर्फबाट देउवासहित पत्नी आरजू राणा, रमेश लेखक र ज्ञानेन्द्रबहादुर कार्की सहभागी थिए । कांग्रेस टोली सवा १० बजे क्याप्टेन थापाको निवासमा पुग्दा एमाले नेताहरू आइसकेका थिएनन् । सधैंजस्तो ढिला पुगेका ओलीसंग शंकर पोखरेल, विष्णु पौडेल र रमेश बडाल साथमा थिए । तर, वामपन्थी एकताको पक्षमा रहँदै आएका बिष्णु पौडेल भने छलफलको बीचमै निस्किए । दुई घण्टाको घनिभूत संवादपछि दुई दलबीच आलोपालो प्रधानमन्त्रीको सहमति बन्यो र पहिलो कार्यकाल ओलीले खाने समझदारी जुटाएर नेताहरू त्यहाँबाट उठेका थिए ।*

*मध्यरातको यो सहमति हठात्को परिणाम भने होइन । गत निर्वाचन लगत्तै कांग्रेस र एमालेका एकथरी नेताहरू साना पार्टीलाई बाहिर राखेर दुई दललाई मिलाउने वातावरण बनाउन भित्रभित्र सक्रिय रहँदै आएका थिए । त्यसैबीच टिआरसी, बजेट, राजदूत, धितोपत्र बोर्डको अध्यक्ष नियुक्तिलगायत विषयमा सरकारसँग असन्तुष्ट रहेका ओली र सत्तामा फर्किने प्रयत्नमा रहेका देउवालाई निकट बनाउन भ्रष्टाचारका २५ वटा फाइल खोल्ने गृहमन्त्री रवि लामिछानेको फितलो अभिव्यक्तिले थप मलजल गरिदियो । अर्कोतिर, नक्कली भुटानी शरणार्थी प्रकरणका फरार दुई आरोपित बेचन झा र एमाले उपाध्यक्ष रामबहादुर थापा बादलका छोरा प्रतीकलाई भारतले समातेर पठाए पक्राउ परेपछि बूढानीलकण्ठ र बालकोटको दूरी झन् नजिकिँदै गयो । असार १४ गते साँझ बेचन पक्राउ परेको भोलिपल्टै आरजु र देउवा बालकोट पुगेपछि किस्तीमा राखेर सत्ताको मोलमोलाई शुरु भैहाल्यो । बताइएअनुसार प्रचण्डले देउवालाई 'मलाई समर्थन गर्नुस्, एमालेलाई हटाइदिन्छु' भनेर प्रस्ताव गरेको कुरा आरजुले ओलीलाई भनेपछि खेल बाक्लिएको हो ।*

*शक्ति केन्द्रको चासो र प्रचण्डसँग बदला*

*राजनीतिक अस्थिरताको दोष संविधानमाथि थोपरेर कांग्रेस र एमाले एक ठाउँमा उभिएपछि माओवादी केन्द्र, राष्ट्रिय स्वतन्त्र पार्टी, एकीकृत समाजवादीलगायत अन्य साना दलहरू दबाबमा परेका छन् । कांग्रेस र एमालेले भनेजस्तो संविधान संशोधन भई निर्वाचन प्रणालीको मौजुदा व्यवस्था परिवर्तन भए सबैभन्दा अप्ठेरोमा माओवादी पर्नेछ । संविधानको मूल विशेषतामध्येको एक समानुपातिक-समावेशी प्रणालीलाई आफ्नो राजनीतिक एजेण्डा दाबी गर्दै आएको माओवादीले संविधान संशोधन गरिए सशक्त प्रतिवाद गर्ने निर्णय गरिसकेको छ ।*

*तर, प्रश्न उठ्छ - राजनीतिक अस्थिरताको जड निर्वाचन प्रणाली कि नेताहरूमा रहेको सत्तामोह ? २०४६ पछिका घटनाक्रम हेर्दा प्रणाली र संविधानलाई अस्थिरताको मुख्य कारण मान्न सकिँदैन । यौटै पार्टीको बहुमत हुँदा पनि पूर्ण कार्यकाल सरकार नटिकेको पछिल्लो उदाहरण स्वयं केपी ओली नै हुन् । तत्कालीन नेकपा नेतृत्वको झण्डै दुई तिहाईको सरकार तीन वर्षमै किन ढल्यो ? नेपाली काँग्रेसलाई आफ्नै पार्टीको एकल बहुमतको सरकार ढालेर २०५२ सालमा मध्यावधि घोषणा गर्नुपर्ने कारण के थियो ? अतः यी र यस्ता प्रश्न उठिरहँदा संविधान संशोधनको आवश्यकता र औचित्य स्थापित गर्नुपर्ने चुनौती रहने नै छ ।*

*अर्कोतिर, फागुनमा समीकरण बनाउँदै गर्दा आगामी निर्वाचनसम्मै सहकार्य गरेर जाने र पार्टी एकताको तहमा पुग्ने समझदारी गरेका प्रचण्ड र ओली किन बीचैमा अलग्गिए ? के घरेलु राजनीतिका घटनाक्रम मात्र यसका कारक हुन् ? या भूराजनीतिक दबाब, प्रभाव र प्रेरणाले पनि भूमिका खेल्यो ? विभिन्न अनुमान, आशंका र विश्लेषण भैरहँदा यसभित्रका केही गुह्य तथ्यहरू क्रमशः खुल्न थालेको छ । प्रधानमन्त्री प्रचण्डको अघिल्लो दिल्ली भ्रमणका क्रममा भारतीय प्रधानमन्त्री नरेन्द्र मोदीका सुरक्षा सल्लाहकार अजित डोभलसँगको भेटवार्ताको सन्दर्भ सुनाउँदै स्रोत भन्छ- ओलीसँग कुनै हालतमा नमिल्नु भन्ने दिल्लीको सल्लाह नमान्दा प्रचण्डले सत्ता गुमाउनु परेको हो । त्यसबेला डोभलले 'जुनसुकै गठबन्धन गर्नुस् तर, ओलीलाई बाहिर राखेर गर्नुस्' भनी प्रष्ट लाइन देखाएका थिए । दिल्लीमा त्यस्तो सुझाव पाएका प्रधानमन्त्रीले उल्टै कांग्रेससँगको सहकार्य तोडेर उनै ओलीसँग दोस्ती कसे । त्यसबाट निकै चिढिएको दक्षिणको छिमेकी मौका मिलाएर प्रचण्डसँग बदला लिने तयारीमा रहेको र त्यसैको परिणामका रुपमा नयाँ समीकरण बनेको स्रोतको दाबी छ ।*

***ठूला मिलेर सानालाई निल्ने रणनीति***

*'राष्ट्रिय सहमतिको सरकार'का नाममा कांग्रेस र एमालेको सत्ता सहकार्य सम्भव भए पनि संविधान संशोधन भने त्यति सहज देखिंदैन । एकातिर दुई दलको मात्र दुई तिहाई संख्या पुग्ने अवस्था छैन, अर्कोतिर संविधान चलाउनेबित्तिकै 'प्यान्डोराको बक्स' खुल्ने निश्चित छ । किनभने संविधानप्रति मधेसवादी दलहरू शुरुबाटै असन्तुष्ट छन् । माओवादी, एकीकृत समाजवादीलगायत अन्य साना दलहरू संघीयता, धर्मनिरपेक्षता र समावेशी-समानुपातिक प्रणाली फेर्न तयार छैनन् । त्यसकारण तानतुन गरेर दुई तिहाई संख्या जुटाइए पनि संविधान संशोधन गर्न त्यति सजिलो हुने छैन । तर, एमाले र कांग्रेस नेताहरू भने मधेसवादी दल संगठित नरहेकाले उनीहरूले त्यो ताकत नराख्ने र 'इजिली म्यानेज' हुने दाबी गर्छन् ।*

*निर्वाचन प्रणाली फेरेर राजनीतिक स्थिरता दिन संविधान संशोधन भनिए पनि भित्री मक्सदचाहिँ साना पार्टीलाई कमजोर बनाउने रणनीतिअन्तर्गत खेल अघि बढेको देखिन्छ । यसअघि सत्ता सुरक्षाका लागि गणित मिलाउन उपेन्द्र यादवको जसपा फुटाइयो । मुकुल ढकालमार्फत कांग्रेस पृष्ठभूमिका स्वर्णिम वाग्ले लगाएर राष्ट्रिय स्वतन्त्र पार्टीभित्र पनि मज्जैले खेल्ने काम भयो । त्यसमा काठमाडौं महानगरका मेयर बालेन साहको पनि भूमिका रहेको बताइन्छ । लामो समयदेखि छलफलमा रहेका मुकुल र बालेनबीच पछिल्लो समय भेटघाट झन् बाक्लिएको र त्यसमा पार्टी भित्र र बाहिरका विभिन्न 'फ्याक्टर' सक्रिय रहेको दाबी गरिएको छ । भनिँदै छ, अब समानुपातिक निर्वाचन प्रणाली हटाएर थ्रेसहोल्डको मापदण्ड बढाई पाँच प्रतिशत पुर्‍याइनेछ । त्यसो हुँदा अन्य दल राष्ट्रिय पार्टी नबन्ने कांग्रेस र एमालेको हिसाब छ । त्यस्तै, संघीयता र धर्मनिरपेक्षता पनि क्रमशः हटाइने छ । धर्मको हकमा 'हिन्दू'को नाम कतै उल्लेख नगरी संविधानबाट धर्म निरपेक्षता मेटाउने सूचना पाएको माओवादी केन्द्रका एकजना सचिवले बताए ।*

*'संविधान संशोधनका लागि मधेसवादी दललाई समेत ल्याएर दुई तिहाई पुर्‍याउने उनीहरूको योजना छ । केपी ओलीलाई समावेशी-समानुपातिक प्रतिनिधित्व पटक्कै मन परेको छैन, देउवा हिन्दु राष्ट्र चाहन्छन्', उनको दाबी छ, 'गणतन्त्रबाहेक सबै उल्ट्याउने तयारी देखिन्छ । तर, त्यो हामी सम्भव हुन दिँदैनौं ।'* ***– साहस न्यौपाने***

## तर...

दिन र विदेशीसँग लाइन क्लियर गराउन कांग्रेसले १७ गते समीकरण गरिनुअघि बिआरआइसम्बन्धी निर्णय लियो ।

यसबीच, प्रचण्ड कांग्रेससँग मिलेर अगाडि बढ्ने मनस्थितिमा हुनुहुन्थ्यो । तर, भित्रभित्रै कुरा अन्तै मोडिइसकेको थियो । ओलीले जसपा फुटाएको त्यसै होइन । जसरी भारत संविधान च्यात्न चाहन्छ, ओली पनि हिजो आफूले गरेको संसद विघटन ठीक हो भन्ने दलिललाई पुष्टि गराउन चाहनुहुन्छ । त्यसैले संसदभित्रै ठूलो पार्टी बन्ने वा सुविधाजनक बहुमतका साथ प्रधानमन्त्री भएर हिजोको कदम सदर गराउने उहाँको रहर हुने नै भयो । विकसित नयाँ राजनीतिक परिस्थितिमा त्यस कार्यका निम्ति ओलीलाई अब सजिलो भएको छ ।

यसअघि ओलीले प्रचण्डलाई निरन्तर दबाबमा राखेर आफ्ना काम लिइरहनुभयो । धितोपत्र बोर्डको नियुक्तिदेखि बजेटका कुरामा प्रचण्डलाई अल्मल्याउनुभयो । प्रचण्डले पनि दिपेश पुन र एटम महरालाई थुनाएर र बेचन झासहित रामबहादुर थापा (बादल) का छोरा प्रतीकलाई समातेर कांग्रेस-एमालेलाई दबाबमा राख्न खोज्नुभएकै हो । यसबीच, सहकारी ठगी प्रकरणमा गृहमन्त्री रवि लामिछानेको हालत कमजोर होलाजस्तो भएपछि गठबन्धन तलमाथि हुने सम्भावना थियो । तर, त्यसअघि नै एमाले-कांग्रेस मिल्न पुगे । अर्कोतिर, दल विभाजनमा उपेन्द्र यादवले दायर गरेको मुद्दा कानुनतः बलियो भएका कारण जित्ने स्थिति छ । त्यसै कारण अदालतलाई दबाबमा राखेर त्यसलाई पर पर धकेल्ने काम भइरहेकै छ ।

## सत्ता...

कांग्रेससँगको गठबन्धनबाट हासिल परिणामलाई बोकेर प्रचण्ड मंसिरमा एमालेको समर्थनसहित प्रधानमन्त्री हुन जानुभयो । र, करिव दुई महिनाको राजनीति कांग्रेसबिना नै चलाउने प्रयास सफल भएन । फेरि सरकारबाट एमाले बाहिरिने र कांग्रेस भित्रिने काम भयो । यो समीकरण एक वर्ष कायम रह्यो र फेरि बीचैमा प्रचण्डले एकाएक कांग्रेससँगको सहयात्राबाट विश्राम लिनुभयो । एमालेसँग सत्तासाझेदारी जारी नै हुँदा घरी कांग्रेससँग एमालेलाई हटाएर जाने प्रस्ताव, घरी ओलीलाई आफू नेतृत्वको गठबन्धनबाटै प्रधानमन्त्री बन्न प्रस्ताव गरिरहनुभयो । कांग्रेसले उहाँको कुरा पत्याएन र प्रयास गरिएको एक महिना पनि नपुग्दै प्रचण्ड-ओलीबीचको सहयात्रा टुटेको छ ।

नक्कली भुटानी शरणार्थी प्रकरणमा फरार अभियुक्त बेचन झालाई पक्राउ गरिएको कुरा १५ गते पुष्टि गरियो । त्यसअघि उनी भारतबाट नेपाल ल्याइएका थिए । भनिन्छ, देउवापत्नी डा.आरजुदेखि नेपाली कांग्रेसका नेता कृष्णप्रसाद सिटौला र ओलीका स्वकीय सचिव राजेश बज्राचार्यसँग सघन सम्पर्कमा रहेका बेचन पक्राउको झड्का स्वयं प्रचण्डका निम्ति महँगो परेको छ । बेचन पक्राउपूर्व कैलालीको टीकापुरस्थित ६ सय कठ्ठा सरकारी जमिन आरजुको समूहले हत्याउन खोजेको भन्दै प्रहरीको टोली त्यता पठाएर एउटा मुद्दा तयार पारिँदै थियो । उता प्रचण्ड र रविले विभिन्न मुद्दा र घटनालाई देखाउँदै कांग्रेस र एमालेसँग बराबरी संवाद गरिरहनु, अर्कातिर प्रचण्डलाई पत्तो नदिई देउवा र ओली चपलीतिर भेटिरहनुका बीचमा अहिले विकसित राजनीतिक घटनाक्रमको पटाक्षेप भएको हो ।

गत शुक्रबार, अर्थात् १४ गते भारतबाट बेचनलाई ल्याइएलगत्तै प्रचण्डले देउवासँग सत्तासमीकरण फेरेर जाने प्रस्ताव राख्नुभयो । तर, त्यसबारे कुनै जवाफ नदिनुभएका देउवाले खबर गरेबमोजिम भोलिपल्टै, अर्थात् असार १५ का दिन ओलीले बालकोटमा बोलाएरै निर्णायक वार्ता थाल्नुभयो । यसका निम्ति रोजिएको ठाउँ थियो, बूढानीलकण्ठस्थित गणेश चोक (चपली) बाट भंगालतर्फ जाने बाटोमा रहेको क्याप्टेन रामेश्वर थापाको घर । त्यहाँ जेठ २८ देखि शुरु भएको देउवा-ओली संवादको तेस्रो श्रृंखलापछि अस्ति १७ गते अन्तिम छलफल भएको हो । सोमबार रातिको अन्तिम छलफल चपलीमै चल्यो । र, दुबै दलका नेताहरू सवा १ बजे त्यहाँबाट निस्किएपछि राष्ट्रिय राजनीति तरंगित भयो । मध्यराति एमाले र कांग्रेसबीच सरकार साझेदारीका आधारभूत विषयमा हस्ताक्षर भयो ।

पछिल्लो छलफलको शुरुमा ओलीले देउवालाई प्रधानमन्त्री बन्न आग्रह गर्नुभयो । देउवाले पहिलो कार्यकाल ओली र त्यसपछि आफू हुने बताउनुभयो । र, त्यही निश्कर्षसहित नेताहरू आ-आफ्नो बाटो लागे । त्यसो त ओलीलाई ६ महिनापछि प्रचण्डले नै प्रधानमन्त्री छाडिदिने पूर्वसहमति थियो नै । सोमबारको सहमतिमा नेपाली कांग्रेसबाट रमेश लेखक र एमालेबाट शंकर पोखरेल साक्षी बसेका थिए । घरधनी क्याप्टेन रामेश्वर थापा पनि त्यसका साक्षी हुन् । कुराकानीका क्रममा पहिला एमाले उपाध्यक्ष विष्णु पौडेल एकैछिनलाई पुगेका थिए तर उनी केही समय बसेर निस्किए । त्यसपछि एमालेकै रमेश बडाल वार्तामा सामेल भए ।

**रवि : छक्कापञ्जा**

चपली बसाइका सिलसिलामा ओली र देउवाले वर्तमान सत्तासाझेदार दलका नेताबारे मज्जैले चर्चा गर्नुभयो । यसक्रममा गृहमन्त्री रवि लामिछानेको नाम आउँदा ओलीले भन्नुभयो, 'त्यो त छक्कापञ्जा हो !' ओलीको कुरा सुनेपछि देउवाले 'फटाहा हो फटाहा' भन्दा गलल हाँसो छुटेको थियो ।

**बजेटदेखि व्यवहारसम्म**

प्रचण्डको व्यवहारमात्रै हैन, बजेटसम्मका विमतिसहित उहाँको सरकार समस्यामा परेको कांग्रेस-एमाले नेताको बुझाई छ । अहिले बजेटमार्फत नै एनसेलको राजस्व मिनाहा गरी एक-डेढ अर्ब तिरे पुग्ने व्यवस्था गरिएको छ । बरु, देउवासँग भेटे त्यतै ठिक्क, ओली भेटे त्यतै लपक्क हुने दोहोरो चालाको मारमा प्रचण्ड पर्नुभएको केही नेताको भनाइ छ ।

## भाउजूको...

अघिल्लो रबिन्सन कम्पनीसँग पनि अथोरिटी नभएकाले अर्कै कम्पनीलाई मर्मतको जिम्मा दिइएको थियो । यसरी एउटा गलत कामलाई लुकाउने र ढाँट्ने क्रममा अझ धेरै गलत हर्कत नेपाली सेनाभित्र देखिन थालेका छन् । अहिलेका रक्षामन्त्री हरि उप्रेतीले रोक्ने प्रयास गरे पनि पहिलेकै क्याबिनेटले निर्णय गरेको कारण रोक्न सक्ने अवस्था नरहेको उनैको कथन छ । पहिलो खेपमा पठाइएको हेलिकप्टर मर्मत गर्न४२ करोड रुपैयाँमा सम्झौता भएको थियो भने अहिले खोलखाल गरी पठाउने तयारी गरिएको हेलिकप्टरका निम्ति ७५ करोड भारतीय रुपैयाँमा सम्झौता भएको बुझिएको छ ।

यो सम्झौताको विरोधमा जर्नेल अशोक सिग्देल देखिएकाले पनि उनीमाथि दवाव सिर्जना गर्न अहिले जन्ममिति प्रकरण सतहमा ल्याइएको एक थरीको टिप्पणी छ । चारैतिरबाट दवाव बढ्दै गएपछि प्रधानसेनापति प्रभुराम शर्मा अबको नेतृत्व लिन तयार अशोकसँग मैले जति गर्न सक्थेँ गरेँ, अब तिमी आफैँ फेस गर भनी टक्टकिएको अवस्था छ । कथंकदाचित सिग्देल प्रधानसेनापति हुन नसक्ने अवस्थामा निर्मल थापा पनि विवादमा तानिने पक्का छ । उनको शैक्षिक प्रमाणपत्र बिहारबाट ल्याइएको हो । नेपालमै अध्ययन रहेको बखत उनले भारतको बिहारबाट इन्टरमिडियट कक्षा पास गरेको प्रमाणपत्र पेश गरेको अवस्था छ । २०३९।२०४० सालतिर उनी अमृत साइन्स क्याम्पसमा अध्ययरत थिए । त्यसैबखत भारतमा पनि अध्ययनरत रहेको देखिन्छ । थापाको शैक्षिक प्रमाणपत्र सन्जयसिंह भण्डारीको जस्तै हो । भण्डारी एनडिसीमा छनोट हुने बखत पूर्णचन्द्र थापा सेनाका ट्वाइसी र छनोट समितिका अध्यक्ष थिए । उनले भण्डारीको अनलाइन डिग्री भएको आरोप लगाउँदै छनोट गर्न अस्वीकार गरे । यस्तो आरोप लागेपछि उनले त्रिभुवन विश्वविद्यालय र शिक्षा मन्त्रालयबाट पत्र लेखाएर डिग्री फर्जी नभएको दाबी गरे । यो दाबीपछि थापा रिसाए । र, बढुवाको सिफारिस गरेनन् । त्यसपछि आफ्नै पल्टन कालीबहादुरका पुराना हाकिम रमिन्द्र क्षेत्रीलाई दुखेसो पोखे । भण्डारीको कुरा सुनेपछि क्षेत्रीले आफ्ना भाइ तत्कालीन प्रधानसेनापति राजेन्द्रलाई नाम थप्न लगाए । बढुवा बोर्डले सिफारिस नगरेको नाम पनि थपिएर आएपछि थापा झनै आगो भए । यसैको इख साँधेर बसेका उनले आफू प्रधानसेनापति हुनासाथ भण्डारीलाई घरतिरको बाटो तताइदिए ।

थापाले जागिरबाट निकालेपछि सोल्टी होटलमा आयोजित एक कार्यक्रममा जम्काभेट हुँदा भण्डारीले 'सलाम' नगरेर रिस फेरेको बताइन्छ । बढुवा समितिको अध्यक्ष आफूं हुने, आफैं सिफारिस गर्ने तर पत्र लेख्न लगाउने गौरवसमशेर जबराले आफू प्रधानसेनापति हुनेबित्तिकै सैनिक सचिव प्रेमप्रकाश थापा मगरलाई बर्खास्त गरेका थिए । जबकि त्यसको भागीदार त सिफारिस गर्ने बढुवा समिति वा त्यसको अध्यक्ष हुनुपर्ने थियो । त्यसको मुख्य कारण छत्रमानसिंह गुरुङ प्रधानसेनापति भएको बेला प्रेमप्रकाश सैनिक सचिव हुनु हो । त्यसबेला नटेरेको भन्दै इगो राखेर थापा मगरलाई बर्खास्त गरिएको चर्चा अहिले पनि चल्ने गरेको छ । उनी बर्खास्तमा नपरेको भए सेनापति हुने लाइनमा थिए । यस्ता असंगत कामले गर्दा आजकल नेपाली सेनाभन्दा बढी प्राइभेट आर्मी भन्दै व्यङ्ग्य कस्न थालिएको छ ।

## रुवाउनमा...

समीकरण बनेसँगै प्रतिपक्षमा बस्ने निर्णय गरेका उनले यसअघि आइजिपीसमेत फेर्न खोजेका थिए । तर, प्रधानमन्त्री पुष्पकमल दाहाल प्रचण्ड र एमाले अध्यक्ष केपी शर्मा ओली सहमत नभएपछि त्यो खेल रोकिएको थियो । यसरी प्रहरी संगठन गृहमन्त्रीको हातको खेलौना बनिरहँदा प्रहरी अस्पतालका प्राविधिक एसएसपीहरू भने मारमा परेका छन् । त्यहाँ कार्यरत डक्टर दिपक र अरुणा बढुवाका लागि योग्य हुँदाहुँदै बढुवा नपाएर घर जान बाध्य बनाइएका हुन् ।

डाक्टरहरू जसमा राज्यको ठूलो लगानी छ, उनीहरूलाई बढुवा गरेर सेवामा निरन्तरताको अवसर दिनुपर्नेमा गृहमन्त्री र आइजिपीको प्राथमिकता अन्तै परेपछि २२ वर्षे सेवा अवधिका कारण उनीहरूले घर जानुपर्ने भएको हो । 'बढुवा छुटेको मात्र भए अर्कोपटक चान्स पाउँथे । तर, सेवा अवधि सकिएकाले घर जानुपर्ने भयो', अस्पताल स्रोत भन्छ । सरकारी पैसामा एमबिबिएस गरेका उनीहरूमध्ये एक जना आँखा विभागका प्रमुख पनि हुन् । यो तहको अनुभवी डाक्टर उत्पादन गर्न वर्षौं लाग्छ । त्यसकारण उनीहरूलाई बढुवा गरेर अधिकतम लाभ लिनुपर्नेमा 'जान्नेलाई छान्ने' भनिएका गृहमन्त्रीले त्यसतर्फ सोचेनन् ।

यसप्रति आइजिपी वसन्त कुँवरसमेत जिम्मेवार बन्न नसकेको गुनासो प्रहरीमा सुनिन्छ । हालै एउटा 'फुली लगाउने' कार्यक्रममा उनले अन्यायमा परेको गुनासो लिएर आउनेहरूलाई लक्षित गर्दै 'बढुवाका लागि हुने चलखेल र दौडधुप स्वीकार्य नहुने' कडा चेतावनी दिएका थिए । न्यायाधीशले इजलासबाट फैसला गरेको शैलीमा संसद्को राज्य व्यवस्था समितिमा उभिएर गृहमन्त्रीको बचाऊमा बोल्ने कुँवरले तल्लो दर्जाका आफ्नै कर्मचारीलाई भने 'चलखेल गर्न नदिने' नाममा अन्याय गरिरहेको एकजना प्रहरी अधिकारीले दुखेसो पोखे । जबकि आइजी आफैं भने राजनीतिक नेतृत्वको दैलो चाहारिरहेका छन् । गृहमन्त्री रविले प्रधानमन्त्री प्रचण्डलाई मनाएर आफूलाई हटाउन लागेको सुइँको पाएपछि गत हप्ता अमेरिका उड्नुअघि उनी एमाले अध्यक्ष केपी शर्मा ओलीलाई भेट्न बालकोट गएका थिए । 'आफू चैं गृहमन्त्रीले हटाउन लागे भनेर गुहार माग्न बालकोट धाउने, अनि अन्यायमा परेका अरु अफिसरले गुनासो गर्दा चलखेल गरेको भन्न मिल्छ ?', तिनै प्रहरी अधिकारी भन्छन् ।

अर्कोतिर, फरार आरोपितको लोकेसन पत्ता लाग्यो भनी गृहमन्त्रीले सार्वजनिक मञ्चबाट चर्को भाषण गरेकोप्रति पनि प्रहरीवृत्तमा असन्तुष्टि छ । सहकारी ठगी प्रकरणमा पक्राउ पुर्जी जारी भएसँगै बेपत्ता रहेका र डिफ्युजन नोटिससमेत जारी गरिएका गृहमन्त्री रविका तत्कालीन व्यावसायिक साझेदार जिबी राईको लोकेसन पत्ता लाग्यो भनेर केही दिनअघि उनले सूचना सार्वजनिक गरेका थिए । जिबी पक्राउ पर्दा थप पोल खुल्ने त्रासमा रहेका रविले आरोपितलाई भगाउन जानाजान यसरी बाहिर बोल्दै हिँडेको सहज अनुमान गर्न सकिन्छ । 'समातेर काठमाडौं एयरपोर्टमा आइपुगेपछि मात्र सार्वजनिक गर्नुपर्ने कुरा हो त्यो', यसमा काम गरिरहेका एकजना अफिसर भन्छन्, 'कुनै व्यक्तिमार्फत चुहिएर मिडियामा आउनु अर्कै कुरा, गृहमन्त्रीज्यू आफैंले त्यसरी बोल्नु हुँदैनथ्यो !',

हाल मलेसियामा रहेका जिबीलाई समातेर नेपाल ल्याउन इन्टरपोलले प्रयास गरिरहेको भएता पनि मलेसिया सरकारले मागेको एउटा पत्र दिन गृहमन्त्रीले चाहेका छैनन् । भनिँदै छ, जिबीविरुद्ध संगठित अपराधमा मुद्दा दर्ता नभएकाले उनको पक्राउको विषयले त्यहीअनुसार महत्व नपाएको हो । र, संगठित अपराधमा मुद्दा नचलाईनुमा गृहमन्त्रीको चासो जोडिएको छ । हुन त ठगी मुद्दामा पनि रेडकर्नर नोटिश जारी गर्न नसकिने होइन । तर, संगठित अपराधमा मुद्दा दर्ता गरेको भए त्यो 'अर्गनाइज्ड क्राइम'सँग सम्बन्धित हुन्थ्यो र अन्तरदेशीय अपराधमा जोडेर प्रहरीले मलेसिया सरकारलाई ताकेता गर्न सक्थ्यो ।

प्रहरी-प्रशासनमा यसरी एकलौटी गरिरहेका गृहमन्त्री रविले आफू निकटलाई ठाउँ-ठाउँमा सेट गरेर सहकारी प्रकरणबाट जोगिने अस्त्र बनाइरहेका छन् । जस्तो, बुटवलको सुप्रिम सहकारी ठगीको अभियोग पत्रमा उनलाई प्रतिवादी बनाइएन तर, पेटबोलीमा भने नाम आयो । लगत्तै त्यसको अनुसन्धानमा खटिएका इन्स्पेक्टरलाई नाम हटाउन दबाब दिइयो । पोखराको सूर्यदर्शन र काठमाडौंको स्वर्णलक्ष्मी सहकारीको अनुसन्धान प्रभावित पार्न पनि त्यस्तै सूत्र अपनाइएको थियो । गृहमन्त्रीको कुर्सीमा भएकाले मात्र सुप्रिम घोटालामा रवि जोगिएका हुन् । नत्र, अभियोग पत्रमै उनको नाम रहेको अवस्था एकातिर छ भने सँगसँगै सहकारीका तत्कालीन कोषाध्यक्ष दिपेश पुनले निकटहरूसँगको कुराकानीमा 'मलाई रविले फसाए' भन्ने गरेका छन् । पूर्वपत्नी इशा श्रेष्ठ र अर्की विदेशी पत्नीतर्फका सन्तानलाई भरणपोषणको जिम्मा लिएका रविले उनै दिपेशमार्फत सुप्रिमको पैसा अमेरिका पठाएको खुलिसकेको छ । तर, प्रहरीको औपचारिक बयानमा भने मुख नखोलेका दिपेशसँग त्यसको भौचरसमेत रहेको बुझिएको छ । यो सबै तथ्य केलाउँदा जिबी राई समातिए सहकारी ठगीका यस्ता अनेकौं रहस्य थप खुल्ने पक्का छ । यो सबै बुझेका गृहमन्त्रीले जिबीलाई भगाउन 'लोकेसन पत्ता लाग्यो' भनेर होहल्ला गरेको प्रहरीहरूले पनि बुझेका छन् ।

गृहमन्त्री रविको अघोषित सल्लाहकारका रूपमा प्रचारित सिआइबी प्रमुख एआइजी श्याम ज्ञवालीले हालै चिनियाँ नागरिकबाट ९ किलो सुन समातेर ६ किलो मात्र बरामदी देखाएको चर्चा पनि छ । उनै ज्ञवालीले 'द डार्क फाइल' का नाममा फेक अडियो बनाएर भ्रम फैलाएको आरोप लागेका सीधा कुरा अनलाइन चलाउने रविका पूर्व सहकर्मीहरूलाई 'फरार' भनी मुद्दा दर्ता गराएका छन् । भनिँदैछ, रवि गृहमन्त्री र ज्ञवाली सिआइबी प्रमुख भएकै कारण अदालतबाट जमानतमा छुटेका उनीहरूलाई त्यस्तो सुविधा दिइएको हो ।

## जिबी...

कारवाही प्रक्रिया अगाडि बढाइने त्यसमा उल्लेख छ । तर, अहिलेसम्म कोही पनि सम्पर्कमा नआएको घरधनी मिगेन्द्रप्रसाद मिश्रले बताए । उनका अनुसार गत मंसिरदेखिको भाडा बाँकी छ । सो अवधिको करिव २५ लाख रूपैयाँ उठेको उनी बताउँछन् । ग्यालेक्सीले मासिक तीन लाख रूपैयाँ बुझाउँदै आएको थियो । भाडा आउन रोकिएपछि मिश्रलाई नै घरखर्च धान्न समस्या भएको छ । २९ आना जग्गामा बनेको भवनमा ग्यालेक्सी टिभीको कार्यालय छ । सो घरजग्गा तीन दाजुभाइको नाममा छ । उनीहरूले बहालबापत आएको रकम भागबण्डा गरेर घरखर्च चलाउने गरेका थिए । तर, लामो समयसम्म भाडा नपाएपछि मर्कामा परेका छन् । बालबच्चाको स्कूल फिस तिर्न नसकेको मिश्र गुनासो गर्छन् । 'यो घरजग्गा दाजुभाइको नाममा छ । यहींबाट हाम्रो घर खर्च धानिँदै आएको छ । मासिक तीन लाख आउँथ्यो । त्योबाट १० प्रतिशत घरबहाल कर तिरेर बाँकीले मसहित दाजुभाइको घर खर्च चल्दै आएको थियो । रवि यहाँ आउञ्जेल भाडा समयमै आउँथ्यो । उनी निस्किएपछि समस्या भएको हो,' उनले दुःखेसो पोखे ।

यता, नेपाल विद्युत प्राधिकरणले लाइन काटिदिएको छ । घरधनीले लगाएको मीटर हटाएर जिबीले छुट्टै मीटर जडान गरेका थिए । लामो समयदेखि बत्तीको पैसा तिरिएको छैन । प्राधिकरणलाई झण्डै २५ लाख रूपैयाँ तिर्न बाँकी रहेको बताइन्छ । सहकारी ठगीमा जेल परेका कुमार रम्तेलले फोन गरेर बिजुलीको लाइन जोडिदिन आग्रह गरिरहने मिश्र बताउँछन् । 'अहिले यहाँ अन्धकार छ । उनीहरूले आफ्नै मीटर जडान गरेका थिए । पैसा नतिरेपछि प्राधिकरणले लाइन काटिदिएको छ । एक जना सुरक्षा गार्ड हुनुहुन्छ । उहाँले बत्ती जडान गरिदिनु भनेर आग्रह गरिरहनुहुन्छ । प्राधिकरणकै लाखौं रूपैयाँ बाँकी छ, मैले कसरी लाइन जडान गरिदिने ? रम्तेलले पनि बेलाबखत फोन गरेर लाइन जोडिदिन आग्रह गर्छन्,' उनले भने ।

तोकिएको समयभित्र आफ्नो घर खाली नभए वडाको रोहबरमा तारबार लगाइने मिश्रले जानकारी दिए । त्यसपछि त्यहाँ भएको सामान लिलाम गर्ने बताए । ग्यालेक्सीको कार्यालयमा हाल दुई वटा गाडी रहेको छ । भन्छन्,'घर खाली भएन भने तारबार लगाउँछौं । त्यसपछि ६ महिनासम्म त्यो बन्द हुन्छ । त्यसबेलासम्म पनि उहाँहरू आउनुभएन भने सामान लिलाम हुन्छ । अपुग भाडा सरकारले दिनुपर्छ । ग्यालेक्सीको १०-११ वटा गाडी थियो । अहिले दुई वटा छ । अरुचाँहि के गरे थाहा भएन ।' उनीहरूले कम्प्युटर पसलमा समेत लाखौं रूपैयाँ तिर्न बाँकी रहेको स्रोत बताउँछ । कम्प्युटरलगायतका इलेक्ट्रिक सामग्री उनीहरूले उधारोमा ल्याउने गरेका थिए । स्रोतका अनुसार गाडी पनि बैंकबाट कर्जामा लिइएको हो ।

**पत्रकार अदालत धाउँदै, बचतकर्ताको बिचल्ली**

तामझामसाथ खोलिएको ग्यालेक्सी टेलिभिजन अहिले लथालिङ्ग अवस्थामा छ । दुई/दुईवटा पाँचतारे होटलमा भव्य सम्मेलन गरेर सञ्चालनमा ल्याइएको टेलिभिजन चल्न नसकेर बन्द भएको छ । वि.सं. २०७८ असोज १५ गते खुलेको ग्यालेक्सी टेलिभिजन केही व्यक्तिको कमाउने थलो बन्दा छोटो समयमै गर्ल्यामगुर्लुम डुबेको हो । टेलिभिजनसँगै हजारौं बचतकर्ता र सयौं श्रमजीवी पत्रकारको मिहिनेतको कमाइ स्वाहा भएको छ । धेरैको घरबार उजाडिएको छ । टेलिभिजन खोल्दा रवि नै प्रबन्ध निर्देशक थिए । तर, आफ्नो स्वार्थ पुरा भएपछि उनले टेलिभिजनको रङ्गिन दुनियाँ च्वाट्टै छोडिदिए । उनकै लहैलहैमा लागेर जिबीले सहकारीको करोडौं रूपैयाँ ल्याएर टिभीमा खन्याए ।

बचतकर्ताको पैसा आफ्नैझैं गरी मोजमस्ती गरे । पत्रकारहरू भने भोकभोकै छन् । टेलिभिजनमा प्रशारण बन्द भएको ६ महिना बढी बितिसकेको छ । सञ्चालक राईको अत्तोपत्तो छैन । सहकारीको नेटवर्किङ खडा गरेर ठगी गरेको आरोपमा उनीविरुद्ध डिफ्युजन नोटिस् जारी भएको छ । पोखराको सूर्यदर्शन बचत तथा ऋण सहकारी संस्थाबाट सहकारीको दुनियाँमा हात हालेका जिबीको समूहले आधा दर्जन बढी सहकारी खोलेको थियो । काठमाडौंको स्वर्णलक्ष्मी बहुउद्देश्यीय सहकारी संस्थामा जिबी आफैं अध्यक्ष थिए । उनी संलग्न सबै सहकारी संकटमा छ । अधिकांश बन्द छ । संसदीय समितिले सूर्यदर्शन सहकारीमाथि छानबिन अगाडि बढाएको छ । सहकारी डुबाउनमा रविको पनि खेल रहेको भन्दै चर्को विरोध भएपछि छानबिन समिति गठन गरिएको छ । स्रोतका अनुसार रविकै योजनामा जिबीले धमाधम सहकारीको बचत ल्याएर टेलिभिजनमा लगानी गरेका थिए । जसले गर्दा आज जिबी आफैं भागेर हिँड्नुपरेको छ । रविकै कारणले जिबी 'घर न घाट' को भएको स्रोत बताउँछ । यता, टेलिभिजनमा कार्यरत पत्रकारहरू तलबका लागि हारगुहार गरिरहेका छन् । ग्यालेक्सीमा कार्यरत ८७ जना पत्रकारले तलब माग गर्दै गत जेठ १ गते श्रम तथा रोजगार कार्यालय र पत्रकार महासंघमा पनि निवेदन दिएका छन् । उक्त टेलिभिजनमा गरिएको लगानी 'बालुवामा पानी' भएको छ । ग्यालेक्सी टेलिभिजनमा सबै आधुनिक प्रविधिको सामान प्रयोग गरिएको थियो । त्यस्तै, आफ्नै युट्युब च्यानल र एफएम पनि सञ्चालनमा थियो । सञ्चालक फरार र टेलिभिजन बन्द भएपछि बचतकर्ताको पैसामा खरिद गरिएको ती सामान बेकामको भएको छ ।

*– अनुसा थापा*

## अदालत...

स्टिङ अपरेशनकर्ता राजकुमार तिमिल्सिनालाई प्रतिवादी बनाइएको सो मुद्दाको पेशी आउँदो साउन १७ का लागि तोकिएको छ । यता, जिल्ला सरकारी वकिल कार्यालय, काठमाडौंले तीनै जनालाई काठमाडौं जिल्ला अदालतमा असार १४ गते मुद्दा हालेको छ । सर्वोच्चद्वारा तारिखमा छाडिएकालाई 'फरार' भनी मुद्दा लगिएपछि प्रतिनिधिसभामा खैलाबैला मच्चिएको छ ।

सर्वोच्चमा तारिख बोकिरहेका उनीहरू कसरी 'फरार' भए भन्ने प्रश्न आफैंमा अनौठो छ । उनीहरू राष्ट्रिय स्वतन्त्र पार्टीका सभापति रवि लामिछानेको सम्पर्कमा छन् । फौजदारी मुद्दामा वारिस आफैंले तारिख बोक्नुपर्ने व्यवस्था छ । 'फरार' भनिएका उनीहरूले सर्वोच्चमा चाहिँ कति पटक तारेख बोके होलान् ? जनचासोको विषय बनेको छ । सर्वोच्चका सूचना अधिकारी घिमिरेका अनुसार काठमाडौं जिल्ला अदालतमा मुद्दा दायर भएपछि भने उनीहरू सर्वोच्चमा देखा परेका छैनन् । 'पहिले तारिख बुझ्न आइरहनुहुन्थ्यो । मुद्दा गएपछि आउनुभएको छैन', उनले भने ।

**अभियोग प्रमाणित भए के हुन्छ सजायँ ?**

सर्वोच्चमा उनीहरूको मुद्दाको फैसला गर्न बृहत पूर्ण इजलासमा पठाइएको छ । न्याय प्रशासन ऐन, २०७३ को दफा १७ मा अदालतको अवहेलनामा कारबाही चलाउने व्यवस्थाबारे उल्लेख छ । उपदफा (१) मा सर्वोच्च अदालतले आफ्नो, उच्च अदालत वा जिल्ला अदालतको न्यायसम्पादनको कार्यमा कसैले अवरोध गरेमा वा आदेश वा फैसलाको अवज्ञा गरेमा अदालतको अवहेलनामा कारबाही चलाउन सक्ने व्यवस्था छ । अदालतको अवहेलना गरेमा एक वर्षसम्म कैद वा १० हजार रूपैयाँसम्म सजायँ वा दुवै सजायँ हुने भनिएको छ । उपदफा (४) मा लेखिएको छ, 'उपदफा (१),(२),(३) बमोजिम कारबाही चलाउँदा अदालतको अवहेलना गरेको ठहरेमा सम्बन्धित अदालतले कसूरदारलाई एक वर्षसम्म कैद वा १० हजार रूपैयाँसम्म जरिवाना वा दुवै सजायँ वा अन्य उपयुक्त आदेश गर्न सक्नेछ ।' त्यस्तै, जिल्ला अदालतमा दायर साइबर र अपमानजनक व्यवहारसम्बन्धी अभियोग प्रमाणित भएमा पाँच वर्षसम्म कैद सजायँ हुन सक्छ ।

## एमाले...

राखेको छैन । तथापि, नेपालमा संविधान संशोधनको विषयलाई प्रमुख दुई राजनीतिक दलबीच सहमतिको कडी बनाउन सक्नु आफैंमा नेपालको संविधान बिझाएको शक्तिका लागि ठूलो उपलब्धि हो ।

त्यसैगरी, अर्को महत्त्वपूर्ण विषय पनि यहाँ जोडिन्छ । पश्चिमी शक्ति विशेषगरी अमेरिकाले नेपालको राजनीतिमा आफ्नो रहँदै आएको पकड गुम्न नदिन गरेको प्रयत्नको परिणामका रूपमा पछिल्लो घटनाक्रमलाई लिन सकिन्छ । यसो किन भनिएको हो भने सोमबार मध्यरातमा सहमति हुनुपूर्व कांग्रेसले दिउँसो बैठक बसेर एउटा घोषणा गऱ्यो- नेपालमा यथास्थितिमा चिनियाँ परियोजना बेल्ट एण्ड रोड इनिसिएटिभ (बिआरआई) स्वीकार गर्न सकिँदैन ।

यसरी अमेरिकाको 'दिल खुश' पारेरै मात्रै सहमतिमा पुग्न सक्नु आफैंमा कुनै संयोग हुनै सक्दैन । किनकि पछिल्लो दिनमा पुष्पकमल दाहाल प्रचण्ड नेतृत्वको सरकार चिनियाँ परियोजनालाई अघि बढाउने कुरामा सकारात्मक बनिरहेको थियो । नेपालमा बिआरआई परियोजनाभन्दा पछि शुरु भएर पनि अमेरिकी परियोजना मिलेनियम च्यालेन्ज कर्पोरेशन (एमसीसी) कार्यान्वयनमा आइसकेको छ । तर, विभिन्न परियोजना छनोटमा परे पनि लगभग सात वर्ष पूरा हुँदासमेत बिआरआई अन्तर्गतका कुनै कार्यक्रम अगाडि बढ्न सकिरहेका छैनन् । यो दृष्टिबाट हेर्दा अमेरिकालाई माओवादीका गतिविधि पछिल्ला दिनमा निकै अपाच्य बन्दै गएको थियो । त्यसमाथि आफ्नो जादुई नम्बरका कारण संसद्को बाँकी पूरै कार्यकाल आफैं प्रधानमन्त्री बनिरहन सक्ने सम्भावनालाई प्रचण्डले सार्वजनिक गरेपछि सत्ता साझेदार एमाले, अन्य देशी शक्ति र पश्चिमाहरू उनलाई पदच्युत गर्न निकै सक्रिय बनेका थिए । त्यो सक्रियताको परिणाम पनि हो, सोमबार रातिको सहमति । जसबाट हुने संविधान संशोधनमा माओवादीलगायत रणनीतिक संख्यासहित संसद्मा आउन सक्ने दलहरूलाई आगामी चुनावमा कमजोर पार्न सकिन्छ भन्ने निश्कर्षमा ती सबै देशी-विदेशी शक्तिसमेत सहमत भएको रूपमा बुझ्न सकिन्छ ।

संविधान संशोधन हुँदा उठ्ने अर्को विषय हो, धर्मनिरपेक्षता हटाई नेपाललाई पुनः हिन्दूराष्ट्र घोषणा गर्नुपर्छ भन्ने माग । एमाले, कांग्रेसलगायत दलको समेत यो विषयमा समर्थन रहने देखिन्छ । त्यसमाथि राष्ट्रिय स्वतन्त्र पार्टीले समेत यसमा आफ्नो समर्थन जाहेर गर्ने सम्भावना उच्च छ । संसद्को अर्को दल राष्ट्रिय प्रजातन्त्र पार्टीको त घोषित एजेण्डा नै हो, यो । नेकपा माओवादी केन्द्र र अन्य केही साना दलले मात्रै नचाहेर नेपाल हिन्दूराष्ट्रमा फर्किनबाट रोक्न सक्ने अवस्था संसद्मा छैन । कट्टर हिन्दूवादी भाजपा नेतृत्वको सरकारबाट नेपाललाई हिन्दू राष्ट्रमा फिर्ता गर्ने बाह्य सहयोग हुन सक्छ । तर, नेपाललाई धर्मनिरपेक्षतामा लैजान मरिहत्ते गर्ने युरोपेली र पश्चिमी शक्तिले अब यही विषयमा थप लगानी गर्ने सम्भावना भने न्यून छ । उनीहरूकै आफ्नो समस्याका कारण ।

उत्तरी छिमेकी चीनका लागि भने यो विषय कागलाई बेल पाकेजस्तै हो । त्यसो हुनाले सोमबारको सहमतिले मुलुकलाई पुनः हिन्दू राष्ट्रतर्फ नै फर्काउनका लागि ढोका खोल्ने सम्भावना उच्च छ । तथापि, अहिले नै नेपालको गणतन्त्र भने खतरामा पर्दैन । किनकि एमाले र कांग्रेसलाई राजा चाहिएको छैन । उनीहरू देशमा राजा पुनःस्थापना नगरी यसलाई हिन्दूराष्ट्र मात्र बनाएर दक्षिण खुशी बन्छ भने त्यति नै गरिदिएर उसलाई रिझाउने मानसिकतामा देखिन्छन् । फेरि पनि कामना गरौं, एमाले, कांग्रेसजस्ता परिवर्तनको एजेण्डालाई दशकौंसम्म बोकेका दलहरूले पश्चगामी मार्ग कोर्ने छैनन् । बरु राष्ट्रिय सहमतिका आधारमा हाल मुलुकले झेलिरहेका आर्थिक, सामाजिक, राजनीतिक समस्याबाट मुक्त पारेर नयाँ र समुन्नत नेपालका लागि ऐतिहासिक पहलकदमी लिनेछन् ।

उल्लिखित विषयको सार यो हो कि सोमबार रातिको सहमतिलाई अग्रगामी मान्न सकिन्न । देशमा आवश्यक छन् भनिएका वर्ग, क्षेत्र र समुदायका मानिसको संसद्मा समानुपातिक प्रतिनिधित्व र राज्यको आफ्नो निश्चित धर्म हुनु हुँदैन भन्ने २१ औं शताब्दीको चेतनासँग पछिल्लो सहमतिको तादात्म्य हुन सक्ने देखिन्न । त्यसैले, सचेत नागरिकले पछिल्लो सहमतिप्रति 'नोट अफ डिसेन्ट' जनाउनै पर्छ ।

## विदेश...

विकल्प पनि छ । अर्को अस्त्र हो, सिके राउत, रेशम चौधरीलगायतलाई मिलाएर मोर्चा गठन गर्ने । त्यसमध्ये पहिलो मिशन रविलाई उपेन्द्र यादव बनाउने हो । यी भित्री खेल केही दिनभित्रै पटाक्षेप हुने सम्भावना देखिन्छ । विराजभक्तलाई जसरी पनि फकाउने कुरामा बालेनका निकटस्थ कुमार बेन जोडतोडसँग लागेका छन् । मुकुलको प्रतिवेदनमा जिल्ला-जिल्लाको वस्तुस्थितिसँगै बालेनका विचार पनि समेटिएको चर्चा रास्वपाभित्र छ । भनिन्छ, प्रतिवेदन तयार पार्दा मुकुल र बालेन सँगै थिए । मुकुलको प्रतिवेदन अहिलेसम्म लुकाइएको छ । उस्तै परे उनी आफैं उक्त प्रतिवेदन बाहिर ल्याउने तयारीमा छन् । यदि त्यो प्रतिवेदन सत्य सावित भयो भने रास्वपा पहिलाको विवेकशील साझाजस्तै कमजोर हुने सम्भावना रहन्छ ।

अर्कातिर, राहदानी मुद्दाको छिनोफानो समयमा नलाग्दा यत्तिका महिना गृहमन्त्री भइसकेकालाई विदेशयात्रामा बाधा पुगेको छ । खानेपानी र महिला, महिला, बालबालिकाजस्ता हेपिएका मन्त्रालयका हाकिमसमेत विदेश धाइरहँदा देशको जल्दोबल्दो उपप्रधान र गृहमन्त्रीले भारतसमेत जान नपाउनु विडम्बना हैन र ! कोही नागरिकको राहदानीजस्तो संवेदनशील मुद्दाको छिनोफानो लगाउन न्यायाधीश वा अदालत प्रशासनका कारणले ढिलाई हुने र नागरिकको विदेश आवत जावत गर्ने अधिकार निरन्तर कुण्ठित हुने कुरा जायज मानिँदैन ।

रविले अमेरिकी राहदानी त्यागेको भन्दै नेपालबाट नागरिकताको दोस्रो प्रति लिएका छन् । अमेरिकाले नागरिकता लिनेभन्दा त्याग्नेलाई नराम्रो मान्छ । अमेरिकी नागरिकता त्यागेर सिक्किमको महारानी बनेकी होप कुककै नजिर यसमा काफी हुनेछ । त्यहाँका राजा चोग्यालकी पत्नी होप कुक पछि अमेरिका गइन्, तर नागरिकता पाइनन् । बरु, राष्ट्रपतिले एउटा विशेष कानुनमा सही गरेपछि पिआरसम्म बल्लतल्ल पाइन् र त्यही आधारमा आफ्नो जन्मभूमिमा बस्न सकिन् । अहिले रविको पनि हालत त्यस्तै हुने देखिन्छ । यस्तो मुद्दा विचाराधीन हुँदा विश्वका विभिन्न मुलुक प्रवेश गर्न कठिनाई हुन्छ । त्यस सन्दर्भमा देशैपिच्छे फरक-फरक व्यवस्था छन् । प्रचण्ड, जनार्दन शर्माहरू अमेरिका गए । तर, अष्ट्रेलिया, नर्वे, डेनमार्कजस्ता देश जान सक्दैनन् । यदि, मानवअधिकार वा कुनै देशमा कानुनी प्रश्न उठेको व्यक्ति छ भने पनि अमेरिकाले 'यो मान्छेलाई यो मितिसम्म पक्राउ नगर्नु' भनेर निर्देशन जारी गरेको हुन्छ । नत्र, त्यहाँको कानुन र अदालतले जुनसुकै ठाउँमा मानवअधिकार उल्लंघन गरेकोलाई पक्राउ गर्छ । त्यसमाथि अमेरिकामा राज्यपिच्छे फरक-फरक कानुन छन् । यसअघि प्रचण्डको अष्ट्रेलिया भ्रमण अन्तिम अवस्थामा रद्ध भएकै हो । रविको हकमा पहिला नागरिकता विवादमा उम्मेदवारी नै खारेज भयो । पछि उनले अमेरिकी नागरिकता र राहदानी त्यागेको निस्सा देखाएर नेपाली नागरिकतासम्म लिएका हुन् ।

## सेनाका...

प्रहरीले उनलाई नियन्त्रणमा लिएको हो । उनी आफ्नो हिरासतमा रहेको सेनाका सूचना अधिकारी सहायक रथी गौरवकुमार केसीले पुष्टि गरे । 'केही दिनदेखि निगरानीमा हुनुहुन्छ । उहाँमाथि सैनिक आचरणविपरीतको कसूर गरेको आरोप छ । अहिले यस विषयमा छानबिन भइरहेको छ', उनले भने ।

## विद्या...

महासचिव शंकर पोखरेल, उपमहासचिव विष्णु रिमाल, राजन भट्टराईबाहेक अरु कोही नेता छैनन्, जो माधव नेपालहरूलाई एकतामा ल्याउनुपर्छ भन्ने कुराप्रति असहमति राख्छन् । त्यसमा पनि उपाध्यक्ष विष्णु पौडेलहरू त एमालेको गिर्दो जनमत जोगाउनका निम्ति पनि एकताको उपाय खोजेरै हिँडेका छन् । तर, विद्याको अन्तर्वार्तामा ओलीको बोलिमात्रै छैन, कांग्रेस रिझाउनका निम्ति भन्नुपर्ने सबै कुरा आएको बताइन्छ । हिजो पनि विद्याले पार्टी एक बनाउने भूमिका खेलेकाले अहिले पनि केही गर्न सक्नुहुन्छ कि भन्ने कतिपय नेताको आशा थियो । तर, उहाँले अहिले नै माओवादीलाई वार कि पार गर्नुपऱ्यो भनेपछि ओली पनि एकताका पक्षमा नहुनु भएको स्पष्ट भएको छ । बाहिरबाट देखिँदा ओली-विद्याको सम्बन्धमा अलि फरक छ किजस्तो देखिएपनि भित्री कुरा सबै मिलेको छर्लङ्ग भएको छ । केपीले बजेटको आलोचना गर भनेर आफ्ना सांसदलाई सरकारविरुद्ध प्रोत्साहित गर्दै आउनुभएको थियो । यही बेला विद्याले एमालेको उपाध्यक्ष भएको बेलाजस्तै कडा वाणी बोल्नुभएको छ । एमाले-कांग्रेसबाहेक अरुको अस्तित्व छैन भनेर उहाँले बोलेको कुरा फागुन २१ मा केपी माधव नेपालको घरमा पुग्नुअघिको लाइनसँग ठ्याक्कै मेल खान्छ ।

परराष्ट्रमन्त्री नारायणकाजी श्रेष्ठले त भनेकै थिए, 'ओलीले प्रचण्डलाई स्लाइन पानी चढाएर राखेका छन् ।' अर्थात्, प्रचण्डलाई धम्काउने, दबाबमा राखिराख्ने, उस्तै परे कोमामा पुऱ्याइदिनेसम्मको तहमा ओली हुनुहुन्छ भन्ने नारायणकाजीको टिप्पणी पनि सत्य सावित भएको छ । त्यस्तो अवस्थामा विद्याको अन्तरवार्ता पनि प्रचण्डलाई तर्साउने खेल भएको बुझ्न गाह्रो छैन । जबकि, विद्याले यसअघि सबै मिलेर अगाडि बढे राम्रो हुन्छ भन्ने गर्नुहुन्थ्यो ।

## कमरेडहरूका...

उठाइदिए । जित्न त पदम गिरी पक्षका गोविन्दले अर्को पक्ष क्लिनस्वीप नै हुने गरी जिते, तर गणेशको भूमिका ओलीको निर्देशनविपरित हुँदा अहिले आगोमा घ्यु थपेझैँ भएको छ । संवैधानिक पदमा रहँदा पार्टीको सम्पूर्ण पदबाट राजीनामा दिएका थिए । अब पार्टी काममा फर्किएका छन् । त्यसैले उनलाई केन्द्रीय सदस्य हुँदै कम्तीमा पोलिट्व्युरो सदस्य बनाउनुपर्ने हो । तर, ओली अहिले यसरी रिसाउनुभएको छ कि, मामुली केन्द्रीय सदस्य पनि बन्लान्जस्तो देखिन्न ।

## को हुन्...

नेता बेदानन्द झाका दाइ कुलानन्दकी छोरीसँग विवाह गर्नका निम्ति नेपाल भित्रिएका उनी नेपालकी छोरी लिएर आफ्नो देश गएनन्, यहीं बसेर पत्नीका नाममा व्यावसायिक कारोबार चलाइरहे । बेदानन्द पञ्चायतकालमा गृह र वाणिज्यमन्त्री हुँदै राजसभा स्थायी समितिको सभापतिसम्म भएका व्यक्ति हुन् । दाइ कुलानन्द ००७ सालको क्रान्तिदेखि नै बिपी कोइरालाका विश्वासिला नेता । पछि तराई मामिलामा दृष्टिकोण मिलेन र कुलानन्दले बिपीको छाथ छाडेर तराई कांग्रेस गठन गरे । उनकै राजनीतिक सहयात्री थिए, गजेन्द्रनारायण सिंह, जसले ०४६ सालपछि मधेसी पहिचानको नारालाई स्थापित गर्दै नेपाल सद्भावना पार्टी बनाए । कुलानन्दले तराई कांग्रेस स्थापना गर्दा बेदानन्द पटनामा अखबारको सम्पादक थिए । दाजुले पार्टी खोलेपछि त्यसलाई फैलाउन र त्यहीमार्फत राजनीतिक गतिविधि गर्न स्वदेश फर्किए । तराईका विभिन्न जिल्लामा संगठन फैलाउँदै २०१५ सालको आम निर्वाचनमा तराई कांग्रेसले भाग लियो, एउटा सीट पनि जित्न सकेन । कुलानन्द त जीवनभर प्रजातान्त्रिक र तराई पहिचानको आन्दोलनमै लागिरहे । बेदानन्द भने पञ्चायतमा प्रवेश गरे । कुलानन्दको निधनपछि उनको परिवारलाई बेदानन्दले नै अभिभावकत्व दिए । र, दाजुको निधनपछि बेचनले दाजुकी छोरीसँग विवाह गरेका हुन् ।

पत्नी नेपाली भएपछि उनकै नाममा बैंक खाता, चल र अचल सम्पत्तिको कारोबारमा सक्रिय भए । शुरुमा नेपाल विद्युत प्राधिकरणका ट्रान्समिटर लाइन जडान गर्ने ठेक्काबाट कुस्त रकम कमाए । फर्म पत्नीको नाममा, काम उनको । पैसा कमाएपछि घरबारसहित सामाजिक प्रतिष्ठा हासिल भयो । राजनीतिमा मधेसी खेमासँग त्यति राम्रो सम्बन्ध भएका व्यक्ति होइनन् । बरु, डा.आरजु राणा, कृष्ण सिटौलासहित एमाले र माओवादीका नेतासँग नजिक छन् र गफाडीका रूपमा चिनिन्छन् । सक्ने नसक्ने सबै कामको जिम्मा लिने बानी छ । त्यहीअनुसार नक्कली भुटानी शरणार्थी बनाई नेपालीलाई अमेरिका पठाउने विषयमा मन्त्रिपरिषद्बाटै निर्णय गराउने भनेर दुई करोड लिएवापत अहिले पक्राउ परेका हुन् ।

करिब ३० वर्षदेखि उनले काठमाडौंमा विद्युतीय उपकरणको ठेकेदारी गर्दै आएका छन् । श्रीमतीको नाममा 'फर्म' खोलेर थापागाउँमा बंगला ठड्याएका छन् । पहिलेपहिले हरेक महिना सत्यनारायणको पूजा लगाउने गर्थे । बेचनले छोराको नाममा रहेको 'विभांशु ब्रदर्स' मार्फत विद्युत प्राधिकरणबाट ठेक्का लिँदै आएका छन् । प्राधिकरणले बिजुलीको ट्रान्सफर्मरदेखि एअर कण्डक्टरसम्म उनकै कम्पनीबाट खरिद गर्दै आएको छ । यति मात्र नभई भारतीयसहित विदेशी ठेकेदारहरूको नेपाल प्रतिनिधिको रुपमा पनि काम गर्दै आएका छन् । देउवापत्नी आरजु राणा, कृष्णप्रसाद सिटौला, ज्ञानेन्द्रबहादुर कार्की, विमलेन्द्र निधि, महन्थ ठाकुर, माओवादी नेता टोपबहादुर रायमाझीलगायतसँग सम्बन्ध बनेको छ । आरजुका भाइ भुषण राणासँग पनि व्यवसायिक चिनजान रहेकै हो । भुटानी शरणार्थी प्रकरणमा तत्कालीन गृहमन्त्री बालकृष्ण खाँण र गृहसचिव टेकनारायण पाण्डेसँग मिलीभगत गरेका झाले सो प्रकरणका अन्य बिचौलियाहरूलाई गृहसचिवसँग भेटाउने कामको समन्वय गरेका थिए ।

सिटौलाले पनि झालाई भेटेर कुरा सुनिदिनु भन्दै गृहसचिव पाण्डेलाई सिफारिस गरेको स्रोत बताउँछ । केसीले २०७८ मंसिर ८ गते राति ८ बजे उनको घर थापागाउँमा दिएको दुई करोडको चेक प्रहरीले फेला पारेको छ । बेचनका छोराहरूले अमेरिकाबाट उच्च शिक्षा हासिल गरेका छन् । एक जना हाल फ्रान्स र अर्को अमेरिकामा छन् । एउटी छोरीको विवाह भारतमै भएको छ । एउटा छोराको विवाह सप्तरीकी नेतृ ममता झाकी छोरीसँग भएको हो । ममता पूर्वअञ्चलाधीश जगदीश झाकी छोरी हुन् । गत उपराष्ट्रपतिको निर्वाचनमा सिके राउत नेतृत्वको जनमत पार्टीबाट उठेकी थिइन् ।